[ वैपुल्य सूत्र महायान नवसूत्रको एक अंश ]

# महायान बुद्ध धर्म दर्शन




लेखक र प्रकाशक :—

पं [illegible]. आशाकाजी बज्राचार्य:-

ललितपुर - अथननि

[ वैपुल्य सूत्र महायान नवसूत्रको एक अंश ]

# महायान बुद्ध धर्म दर्शन



लेखक र प्रकाशक :—

पं बै. आशाकाजी बज्राचार्यः-

ललितपुर - अथननि



५००

मूल्य ४/-

## चार युगोदय दिन

१) सत्ययुग उदय दिन कार्तिक शुक्ल नवमी तिथि (जुगारि)
२) त्रेतायुग उदय दिन माघ पूर्णी
३) द्वापर युग उदय दिन बैशाख शुक्ल अक्षय तृतीया
४) कलियुग उदय दिन श्रावण कृष्ण त्रयोदशी

त्यस शुभ दिनमा महायान धर्म बुद्ध संबुद्ध सम्यक संबुद्ध दीपंकर भगवान् निमन्त्रणार्चन गरि पिण्ड पात्र पूर्ण क्षीरोदन भोजन विविध प्रकारको अन्न बृहि फल दक्षिणा रोति औषधो पुस्तक अनेक बस्तु दान- अघि सर्वानिन्द राजा एवं रत्नकेतु राजाहरूले गरे जस्तै क्रमशः बुद्ध वोधिसत्वादिको सांघिकहरू सबैलाई - गृहस्थि श्रद्धावान् बौद्ध धर्मावलंवी हरूले पनि अद्यापि दान गरि अप्रमेय फल प्राप्त गर्ने नेपालमा चलन छन् ।



**मनुष्य आयु**

| | | |
|---|---|---|
| सत्य युगमा | — | ८४००० |
| त्रेता युगमा | — | ४०००० |
| द्वापर युगमा | — | २०००० |
| कलि युगमा | — | १२० |

**पुस्तक प्रकाश साल**

| | | |
|---|---|---|
| कलियुग सम्वत् | — | ५०७७ |
| बुद्ध सम्बत् | — | २[illegible]२० |
| नेपाल सम्बत् | — | १०९७ |
| बिक्रम सम्वत् | — | २०३३ |

कार्तिक कृष्ण अष्टमी

मुद्रकः– सुभाष प्रिन्टिङ्ग प्रेस नकबहिल, ललितपुर फो. नं. २१–१९१

# नम्र निवेदन

बुद्धोपदेश बिश्व प्रख्यात त्रिपिटक एवं वैपुल्य नव सूत्र, बुद्ध जातक अन्य तन्त्रादि ग्रन्थहरूको प्रमाणानुसार प्राचिन बुद्धयान बुद्धत्रय महायान वज्रयान तंत्रयान सहजयान बुद्ध धर्म यथार्थ बोध हुने विषय— मंजुश्रीगुरू र मेरा पुज्य परम गुरू प. माधव नाथ व्याकरणाचार्य स्मरण गरी यो महायान बुद्ध धर्म दर्शन नामक पुस्तक एक सानो भएपनि ल. पु. आकुबहाल महाबौद्ध टोल निवासी श्रद्धालु जोगराज शाक्य वंशको अनुमति द्वारा प्रकाश गर्न पाएकोले वहाँलाई सहस्रवार धन्यवाद गर्दै अत्यन्त हर्षमा आभारि छु ।

ल्हासा निवासी वौद्ध विद्वाँन् लामा गुरूहरू र जापान लंका ब्रंम्हा निवासी वौद्ध विद्वाँन् गुरूहरूले पनि, फेरी उक्त स्थानमा गई अध्ययन द्वारा वौद्ध विद्वाँन् गुरू भई, नेपाल पवित्र पुण्य भूमीमा आई आदि बुद्धालय स्वयंभू बुद्ध भगवान् चैत्य महाबुद्ध ख.स्ति महाबौद्ध स्थान, अरू वौद्ध विहारमा वसी वरावर–वहुजन हिताय सुखाय लोकानुकम्पाय निमित्त बुद्ध धर्म यथार्थ श्रावक प्रत्येक महायान वज्रयान तंत्र मंत्र सहजयान माथि सम्मको पूजादि देखाई धर्मोपदेश द्वारा वोध गरि उपाशकोपाशिका धेरै शिष्य वर्ग वनाई प्रज्ञा शील समाधि शिक्षा दिक्षाको ज्ञान ध्यान दिएर देश शान्ति हुने शुभ कल्याण मार्ग देखाई काम गरेको सवैले विदित भएका छन् ।

एवं प्रकारले नेपाल वासी बर्तमान वौद्ध धर्मावलंविहरूको गुरूहरूले पनि अध्ययन वलियो गरि यथाशीघ्र गर्न सके पूर्ण रूपको गुरू हुन्छन् भन्ने आशा गर्दछु ।

यसमा नम्वर १२ चन्द्रप्रभ नृप जातक देखि नम्वर ३१ मणिचूड राजकुमार जातक सम्म अनुवाद संशोधन गरेको वारे काठमाडौं निवासी सुश्री नानी माया मानन्धर वी. ए. लाई र पुनः अन्यत्र ठाउं ठाउमा भाषा संशोधन गरि सहयोग गर्ने सुश्री विणु बज्राचार्य-लाई पनि मेरो हृदय देखि धेरै धन्यवाद ज्ञापन गर्दछु ।

यो पुस्तक प्रचार भएको पुण्यानुभावले नेपाल देशमा सर्वदा विघ्नोपद्रव शान्तभई महाराजको दीर्घायु आरोग्यानन्द होस भन्ने कामना छ ।

लेखकको परिश्रम सफल गर्ने निमित्त अध्ययन गर्ने महानुभावहरूको कहीं संखाभए उक्त पुस्तकमा उल्लिखित भएको प्रमाण संग सल्लाह गरि बुझ्नु, तथापि चित्त नबुझे लेखकको घरमा उपस्थित भई शान्ति पूर्वक छलफल गर्ने विद्वानहरूको ठूलो कर्तब्य हुन ।

उक्त पुस्तकमा कहिं कहिं अक्षर उच्च नीच भई प्रूफ विग्रेको विषयमा अध्ययन गर्ने महानुभावहरूले क्षमा पूर्वक विचार गर्ने पनि ठूलो आशा गर्दछु । जय अस्तु ।

बुद्धं शरणम्—लेखक

# दुई शब्द

विश्व प्रसिद्ध बौद्ध ग्रन्थ त्रिपिटक एवं नवसूत्र सद्धर्म बुद्ध जातक आदि बाट महायान बज्रयान तंत्रयान र सहजयानको यथार्थज्ञान बोध हुने महायान बुद्ध धर्म दर्शन नामक पुस्तक नेपालीमा ल्याउन पाएकोमा वहाँलाई सहस्र धन्य प्रशंसा गर्दै आफुलाई पनि गौरव वीत सम्भन्छु ।

यस पुस्तकका लेखक पं. बं. आशाकाजी बज्राचार्यज्युको अथक प्रयाश जगत शीलता र परिपक्वताको फलस्वरूप नेपालीमा आज सम्म अप्रकाशित यस बौद्ध ग्रन्थहरूको परिचय स्वरुप यस पुस्तकबाट पाठक बर्गलाई अवश्य पनि ज्ञान शील समाधि र मैत्री भावको शान्ति लाभहुने छन् भनि आशा गर्दछु ।

अन्तमा यस महायान बुद्ध धर्म दर्शन पुस्तक प्रकाश गरेको पुण्यले विश्व शान्तिको कामना गर्दै आफ्नो यो दुई शब्द यही टुग्याउछु । अस्तु ।

**जोगराज शाक्य वंश**



लेखकः-
पं. वै. आशाकाजी बज्राचार्य
ललितपुर, अथननि

# महायान वुद्ध धर्म दर्शन

नमो भगवते तथागता यार्हते संम्यक् संवुद्धाय ।

भगवान् तथागत अर्हत् संम्यक संवुद्ध लाई नमस्कार ।

बृ० स्वयंभूपुराण पत्र ११८

त्रिरत्न वन्दन

नमो वुद्धाय धर्माय संघाय च स्वयंभुवे ।

त्रिरत्न मूर्तये तस्मै आदि वुद्ध स्वयंभुवे ।

वुद्ध धर्म संघ त्रिरत्न मूर्ति आदिवुद्ध स्वयंभु (पंचतथागत) लाई नमस्कार ।

त्रिरत्न वुझनु

वुद्ध, संवुद्ध, संम्यक् संवुद्ध तथागत हुन्, एवं स्वयंभू भगवान् आदि पंच वुद्ध, अतीत सप्ततथागत दीपंकरादि वुद्धहरु लाई वुद्धरत्न भन्दछन् । १ ।

यीनै सर्वज्ञ वुद्धहरुको अमृत वचनलाई प्रज्ञापारमिता धर्मरत्न भन्दछन् । २ ।

प्रज्ञा ज्ञान, वुद्धको अमृतवाणी वुझी धर्म मार्गमा गमन गर्ने शील वान् हरुलाई संघरत्न भन्दछन् । ३ ।

बज्र यानमा, स्वयंभू पंच वुद्ध चिन्ह मकुट शिरमा धारणा गर्ने वज्रसत्व वुद्धरत्न, प्रज्ञापारमिता ज्ञान मूर्ति धर्म रत्न, आर्यावलोकितेश्वर करुणामय संघरत्न,

## ज्योतिरूप पंच बुद्ध स्वयंभू ज्ञान

| दिशा | नाम | ज्ञानतेज | बर्ण | कुल | मुद्रा | आसन |
|---|---|---|---|---|---|---|
| मध्ये १ | वैरोचन | शुबिशुद्ध धर्म धातु, | श्वेत | वुद्ध कुल | वोध्वंग | श्वेत सिंह |
| पूर्वे २ | अक्षोभ्य | आदर्श, | नील | वज्रकुल | भूस्पर्श | श्वेत गज |
| दक्षिने ३ | रत्न संभव | समता | पीत | रत्न कुल | वरद | श्याम अश्व |
| पश्चिमे ४ | अमिताभ | प्रत्यवेक्षन | रक्त | पद्म कुल | ध्यान | हरित मयूर |
| उत्तरे ५ | अमोघसिद्धि | कृत्यानुस्थान | हरित | सुकर्मकुल | वज्रकीति आदर्श | रक्त गरुड |

## पंचवुद्ध हरुको वर्ण र स्त्रीहरु तथा पुत्रहरुको पनि नामावलि

| संख्या | पंच वुद्ध | बर्ण | स्त्री | पुत्रहरु वोधि सत्व |
|---|---|---|---|---|
| (१) | वैरोचन | श्वेत | लोचनी तारा | विश्व पाणि. वो० |
| (२) | अक्षोभ्य | नील | मामकी तारा | वज्र पाणि. वो० |
| (३) | रत्नसंभव | पीत | पाण्डला तारा | रत्न पाणि. वो० |
| (४) | अमिताभ | रक्त | अर्यतारा | खड्ग पाणि. वो० |
| (५) | अमोघसिद्धि | हरित | कमला तारा | पद्म पाणि. वो० |

नेपालमहात्म्य नेपालइतिहास, बृ० स्वयंभू पुराण आदि अध्यन गरेकाहरुले राम्रो संग यो ज्योतिरुप पंच वुद्ध स्वयंभू ज्ञान विदित हुन्छन् ।

## पंच वुद्धको विवरण

माथिगएका वुद्धहरू तथा अरु असंख्य वुद्ध वोधिसत्वादि आर्यतारा लोकेश्वरहरुले परिक्रम गरिएको सद्धर्मपुणरीक नाम ठुलो सुन्दर सुगन्ध कमल ( पद्म ) प्रादुभाव भएको मा, तंत्रोक्त वीजाक्षर मंत्र, ॐ आहँ ह्रींखं -भन्नेले युक्त अभ्यन्तर चक्रको

पद्मपत्रमा मध्य भागदेखि यथाक्रमले अघिका कल्पमा भएको पंच वुद्ध ( पाँचवुद्ध ) हरु अमृजपुर अकनिष्ठाभुवन सुखावती नाम वुद्धभुवन वाट स्वयँ अवतरण भएका उक्त कमलमा विराजमान्भै नेपाल मण्डल मध्ये प्रकाशमान् भएका छन् ।
अद्यापि सबैले दर्शन प्राप्त भएका ज्ञानचक्षु ज्ञानदीप वुद्धरत्न स्वयंभू चैत्य वुद्धमण्डल आदिवुद्धालय धर्म धातु स्तूप वज्रधातु महामण्डल नाम प्रसिद्ध भै बिद्य मान छन् ।
द्वापर युगमा गौंड देश निवासी राजा प्रचण्ड देव नेपालमा स्वयंभू भगवान् पंच वुद्ध दर्शनार्चन गर्नुमा आउनुभएको हो । केहि समयमा महामंजुश्रीगुरू द्वारा चूडाकर्म गरि शान्त श्री महाभिक्षु नामकरन भइ ६ वर्ष धर्मोपदेशमा भ्रमण गरे पछि पुनः उक्त गुरू द्वारा वज्राचाय्य।भिष्येक प्राप्तगरि शान्तिकराचार्य गुरु भई धर्माकर राजा यजमान र अन्य जनताहरुको सहयोग वाट स्वयंभू पंच वुद्धालय ज्योतिरुप चैत्य, शास्त्रानुसारले गोप्यगरि पुनः शान्तिपुर नाम गुह्यालय आगम् गुफा वनाई गुरु शान्तिकराचार्य ९ कोथामा भित्र बसि समाधियोग द्वारा सिद्ध भएको शान्ति-पुर गृहालय अद्यापि विद्यमान् भएका छन् ।

## वंशावली प्रमाण

नेपालमा समयानुकुल केहि कालान्तरमा स्थापना भएको प्रख्यात चैत्व वुद्ध स्तप पांच (५) स्थान वुझनु ।

१) सत्य युगमा विपश्वि बुद्धले यो कालिदहं पोखरीमा कंकोल (पलेपु) रोपण गरेको वीजवाट पद्म प्रादुर्भाव भई स्वयंभू पंचवुद्ध चैत्यस्तूप सत्ययुगमा शिखिवी वुद्धको पर्यायमा उत्पति भएको ।

२) नमरा, नमोवुद्धाय चैत्य स्तूप द्वापर युगमा काश्यप तथागतको पर्यायमा महासत्व वोधिसत्व को अष्ठिधातु गर्भराखि पाँचाल देश नेपाल पनौति स्थित महारथ राजाले निर्माण गरेको ।

३) कलिगत सम्बत् २५२८ मा बृषदेबवर्म राजा गद्दीमा बसेको, नित्य वज्रयोगिनी सेवागरि १२ वर्ष पछि साखो वज्रयोगिनी स्थानमा बृषदेव राजाले पंच वुद्ध मूर्ति चैत्य स्थापना गरे ।

४) पुनः ३ वर्ष पछि वृषदेव राजा गोडावरि तीर्थ र वन भ्रमन गरि आउदा वास वसेको स्थानमा विचार गर्दै बन्देजु (वरे) ग्राम नामराखि एक देश वनाई उक्त-स्थानमा पंचबुद्ध चैत्य मूर्ति स्थापना गरे।

५) वौद्धस्थान (खास्ति) शाक्यमुनि वुद्ध निर्वान पछि मानदेव राजकुमारले पितृ हथ्या पाप मोचन गर्ना निमित्त पंचवुद्ध स्तूप चैत्य मूर्ति वनाए।

## अशोक स्थूल चैत्य ५

पटना देश जन्म चक्रवर्ति अशोक राजा नेपाल तीर्थ भ्रमनको समय, प्रथम स्वयंभू भगवान् दर्शनार्चन, पछि ललितपुरमा वुद्ध धर्मार्थि छन् भन्ने वोध गरि अशोक पटन नामकरण राखि, प्रजाहरुको साहितार्थले लक्ष चैत्य व्रत द्वारा निर्माण गरेको वुद्धमूर्ति सानुचैत्य कोटि प्रमानको ५ भाग गरि एक एक भाग गर्भ राखि भगवान् वुद्धमूर्ति स्थूल चैत्य ५ स्थापना गर्नु भए।

सत्य युग प्रमाणले,इपि स्थूल चैत्य १ त्रेतायुग प्रमाणले त्यता स्थूल चैत्य १ द्वापर युग प्रमाणले लगंखेलमा स्थूल चैत्य १ कलियुग प्रमानले पुलचोकमा स्थूल चैत्य १ पुनः वाकि भएको चैत्य गर्भराखि स्थान स्थानान्तरमा हजारौं चैत्त स्तूप निर्माण गरेको अद्यापि अशोक चैत्य विद्यमान छन्। ०।

तेयीस सय वर्ष २३०० अघि पटना सहरमा जन्म भारत जम्बुद्वीपको राज राजेश्वर बुद्ध धर्म प्रियदर्शी अशोक महाराज आफ्नु गुरू आयुष्मान उपगुप्त महास्थवीर भिक्षुको साठ कान्छी वडामहारानी तिष्परक्षिमा र पुत्री चारूमति सहित नेपाल तीर्थ भ्रमण गर्न आउनु भएका समयमा प्रथम स्वयंभू भगवान् पंच बुद्ध एवं मंजुश्री गुरू दर्शनार्चन उप्रान्त यो ललितपुर देशमा आउनु भई अशोक पटन भन्ने नामराखि प्रजाहरूको साहयतार्थ द्वारा एक करोड लक्षचैत्य तयारी भएको पांच भाग गरी प्रत्येक १।१ स्थूल चैत्य स्वयंभू बुध्द मूर्तिमा गर्भ राखि स्थूल चैत्य पांच स्थानमा स्थापना गरि पुनः ४ विहार बनाए।

तत्पश्चात् देवपट्टन गोल देशको राजा गर्नका निमित्त ललितपुरको देवपाल राजकुमारलाई पुत्री चारूमती विवाह रूपले कन्यादान दिएर रानीगरि दिए। पछि स्वयं रानीले चारूमती विहार (चाय्बहिल) बहाल बनाएको अद्यापि प्रख्यात छ।

अशोक नृपले जम्मा चैत्य निर्माण गरेको ८४००० हजार छन् भन्ने प्रमाण वंशावलीमा उलिखित छ।

स्थुल चैत्य १ र दिहार ४ पनि लोप भएको देखिन्छन्।

## शंकराचार्यको संक्षिप्त विवरण

शाक्यमुनी बुद्ध महापरिनिर्वाणको केही समय पछि बृषदेव राजाको पालामा काशीबाट शंकराचार्य स्वामी नेपालमा आई बौध्दगुरु बज्राचार्यहरुलाई स्वार्थीले छोपि तिमीहरुको अज्ञानता देखाउन बुद्ध धर्म नाश गरि ८४००० मूल मूल ग्रन्थ आगोमा राखि भस्म गरे। पछि फेरी साखो बज्रयोगिनी देवीका मन्दिरमा गई त्यहाँ स्थापना भएको प्राचीन बुद्धमूर्ति स्वयंभू चैत्यलाई पल्ताई पहिले कहीले नभएको नगरेको थिती ढुंगाको भैरब मूर्ति स्थापना गरि हिंसाकर्मको प्रथा त्यहाँकै गुभाजु पुजाहारिलाई नै गराई दिएको भैरब चक्रपूजा अद्यापि गर्दैछन्।

यो भन्दा पहिले—अहिंसा परपोधर्म यतोधर्म ततोजय:। भएको थियो।

त्यहाँ देखि, हिंसाया परमोधर्म सोर्हिसा परमोगति:। भए। पीठ पीठमा पहिले नगरेको हिंसाको प्रथा भैरब चक्र पूजा बढदै आए। बौद्धमार्गी पुरोहित तथा यजमानहरू स्वार्थीमा दुवी नाचि ढ्डिी खुसि भएको देखि अव बौद्धमार्गीहरुले मुखले मात्र नमो रत्न त्रयाय, कार्यले उत्थान वा उन्नति गर्न सक्दैन भन्ने निश्चय गरी शंकराचार्य स्वामी अन्यत्र भ्रमण गरी तिब्बत गई रहेको बेलामा त्यहाँका लामागुरुहरुले खासामा पुगेपछि उनलाई मारिदिए भन्ने कुरा वंशावलीमा उल्लेखित छन्।

—

## सुगतावदान १२ अध्याये

## सप्त तथागतहरूको विवरण

| सप्त ७ बुद्ध जन्म | जाति | जन्म भूमी | तत्माता | तत्पिता | तत्पत्नी |
|---|---|---|---|---|---|
| सत्य युगमा विपश्चि १ शिखिवि २ | क्षत्रि क्षत्रि | वन्धुमती अरूणाक्ष | वन्धुमती देवी प्रभावती | वन्धुमान् राजा अरूण राजा | विपश्यन्ती शिखिमालिनं |
| त्रेतायुगमा विश्वभू ३ ककूछन्द ४ | क्षत्रि ब्राम्हण | शामन्व क्षमावती | यशोवती विश्वायणी | सुप्रणीत राजा अग्निदत्त राजा | विश्वधरा ककुत्रवती |
| द्वापर युगमा कनकमुनि ५ काश्यप ६ | ब्राम्हण ब्राम्हण | शोभावती वाराणसी | उत्तराणी धनवती | यज्ञदत्त राजा बन्धुदत्त राजा | कण्ठमालिनी धमधरा |
| कलि युगमा शाक्यमुनि ७ | क्षत्रि | कपिलवस्तु | मायादेवी | शुद्धोदन राजा | यशोधरा |

## भद्रकल्यावदान ३६ अध्याये

**गौतम बुद्ध पुत्र राहुल भद्र कुमार वोधिसत्वको स्त्री कमला पछि राहुल भद्र कुमार (वोधिसत्व) भगवान् बुद्ध ( पिताको) भई अर्हत् 'पद'. प्राप्त भए। दरवारमा पछि शुद्धोदन राजाले भगवान्को शरण जानु भयो। वोधिज्ञान प्राप्तभए पछि स्वर्ग**

| तत्पुत्र बोधि | तप गरेको बृक्ष | आयु | मुख्य शिष्यहरु | शाक्य मुनिबुद्ध अघि बोधि सत्व जन्म |
|---|---|---|---|---|
| महामति रत्नधर | श्वकको सिमा खरि बृक्ष रूख कमल | ८०००० ७०००० | खण्ड १ तिष्य १ अभिसभव १ क्षेमंकर १ | सत्य धर्म बोधिसत्व, क्षमराज बो० |
| आकाश गर्भ सकलमंगल | धू सिमा साल बृक्ष सिसौ बृक्ष सिसो सिमा | ६०००० ४०००० | सोण्ड १ उत्तर २ तुपसत्तर ३ विधुर १ संजीव १ बुद्धिक्ष १ | पर्वनारष बो० ज्योतिपाल बो० |
| कनकराज आनन्द रावल | दुवं सिमा डम्री बृक्ष बर बृक्ष | ३०००० २०००० | भायोक्षु १ भारद्वाज २ शिष्य १ ओत्तर २ सोत्थित ३ | सुधर्मराज बो० ज्योतिराज बो० |
| राहुल भद्र | पिपल बृक्ष वंगल सिमा | ८० | शालिपुत्र १ मौद्गल्यायण २ आदि | सर्बार्थसिद्ध बो० |

देवी, उस्को गर्भबाट जन्मेका पुत्र द्वि (२) छन् १ मैत्री, २ सकलानन्द शरणमागइ अनुयायि भएर श्रावणेर शिक्षा दिक्षा लिएर पछि भिक्षु बनाति सकलानन्द राजकुमारलाई राज्यदिनु भई आफु पुत्र वास मिल्यो ।

## नेपालमा भैंसिको मासुखाने चलन चलति भएको कुरा

नेपालमा ई. सं. १३२४ बि. सं. १३८२ ने. सं. ४४४ मा हरि सिंहदेव राजाको पालामा भक्तपुर तुलजादेवी (तलेजु भवानी) मा गई पैले कहिले नगरेको नभएको थिति चलाउनको लाई अरुण नाम भएको रांगो वनमा खोजी ल्याएर हरिसिंहदेव राजाको वचनले मारि नेपालमा परंपरा देखि कसैले नखाएको रांगोको मासु रगत ठूलो प्रसाद भनि खवाइदिए । त्यहाँ देखि नेपालवासी विशेष नेवारि जातिले स्वार्थीमा लागी रांगोको मांसाहार छोड्न नसकि, पीठ पीठमा गई हिंसाको प्रथा मचाई भैरबचक्र पूजा द्वारा आफ्नो घर घर र विहारको आगममा समेत पूजादिमा मांस प्रयोगाहार गर्दै ल्याए, जस्ले गर्दा बौद्धमार्गी को साथै बुध्द धर्मको नाममा उपहासजनक कार्य भैरहेका छन् । यसरी बुध्द धर्मको नियम बिनाश हुदै गए ।

## तथागत वचन

सद्धर्म पुरारीक सूत्र' १३ परिवर्त, श्लोक १०

ये चापि विविधान् प्राणिन् हिंसेयु भौंगकारणात् ।

माँसं सूनाय विक्रेन्ति संस्तवं तैर्विवर्जयेत् ।

जस्ले आफ्नु स्वार्थीको निमित्त विविध प्राणिहरु लाई मारि माँस विक्रीगरि व्यवहारको भोग गर्दछन्– तिनिहरुका संगत् समेत् गर्नु हुन्दैन ।

## अहिंसा

अदृष्ट १ प्राणि घाटक आफुले नदेखेको,

अश्रुत २ प्राणि घाटक आफुले नसुनेको,

अपरि शंकित ३ प्राणि घाटक आफुले वचन नदिएको,

केहि संखा नलागेको अकस्मात् अरूले दिएको निःस्वार्थीले शोधन युक्त अल्प-मात्र तयारि मांस खाएको दोष हुने छैन ।

भगवान् बुद्धले आफ्नु पुत्र राहुल भद्र बोधि सत्वलाई चूडा कर्म गर्नु भएको समयमा त्यहाँ उपस्थित भएका विद्वान शिष्य वर्ग उपाशकोपाशिका गृहस्थिहरू सबैलाई सुनाउनु भएको अमृतोपदेश यस्तो छ ।

भद्रकल्यावदान ३६ अध्याये चूडाकर्म नियम

आदौतावत्प्रशन्नात्मा त्रिरत्न शरण कुरू ।
विरंम्य दशपापेभ्यः शुछशीलं समाचर ।
आमिषं भोजने रागं माकुरूष्व कदाचन ।
काम ल्केशालयेचापि मानुषं माभिचारय ।

मनुष्य जीवन आजीवपर्यंत चूडाकर्मको विधानमा पूजा आरंभ देखि चित्त प्रशन्न भएर काय वाक शुद्धगरी प्रथम त्रिरत्नको शरणमा जानु ।

दश अकुशल (पाप) देखि अलग भएर स्वभाव शुद्ध हुने पंचशील अथवा अष्टशील एवं दशशीलको आचरण धारणा गर्नु ।

आमिष (मासु, रगत, माछा, अण्डफुल, लशुन, प्याज, छ्यापि) दुर्गन्ध वस्तुको भोजन नगर्नु र पुनः गाजा, चरेस, सुरति र अफिम आदि मदिरा समेत पिउनु कदापि शेवन गर्ने योग्य छैन त्याग गर्नु । शेवन गरेमा पापले लिप्त हुन्छ । एवं पंचभद्र वर्गी शालिपुत्र महामोङ्गल्यायण आनन्द काश्यप आदि विद्वान वर्ग-हरूलाई पनि श्रावणेर शिक्षा दिक्षा दिनु भएको चूडाकर्म विधानको पूजादि कर्ममा उक्त आमिष दुर्गन्ध बस्तु शेवन गन योग्य छैन भन्नु भएको बुद्धोपदेश उल्लेख छ ।

अघि द्वापर युगमा महा मंजुश्री गुरु द्वारा गौंड देशबाट नेपालमा भ्रमण गर्न आउनु भएका प्रचण्डेव राजालाई स्वयंभू गोपुछ पर्वतमा राखी श्रामणेर शिक्षा चूडाकर्म गरी शान्त श्री महा भिक्षु नामकरण राखि, पुन बज्राचार्याभिषेक गरी शान्तिकराचार्य नामकरण गर्नु भएको समयमा पनि उक्त दुर्गन्ध वस्तु आमिषको शेवन निषिध्द गरेको बृ. स्वयंभू पुराण आदि ग्रन्थमा उल्लेख छ ।

## भद्राकल्पावदान २७ अध्याये

तत:क्षीरोदनै र्भोज्यैः पंचामृतै र सायणौ : ।

ब्यञ्जनैः सुर सैःषभ्दिः फल मूलादि भिः क्रमैः।

बुध्द शिक्षापद चूडाकर्म आदि पूजा आरंभ देखि क्षीर सहित पंचामृत युक्त भात रासायन सुगन्ध वस्तु सहित ६ प्रकारको फल प्रयोग गरी क्रमरुपले शुध्द भोजन गर्नु बुध्द सिध्दि प्राप्त हुन्छ।

स्वयंभू ज्ञान बुद्धधर्म बुद्धचर्य बुद्धयान ब्रत, चूडाकर्म विधान देखि बुद्ध पूजादिमा नियम पालन गर्नु पर्ने प्रमाण,

बुद्धोपदेश

## लंकावतार सूत्र ८ अध्याये, पुनः समाधिराज सूत्रमा पनि,

मध्यं मांस पलाराडुन भक्षयेयं महामुने ।

वोधिसत्वै महासत्वै भीषभि जिनपुंगवैः ।

हे महामुनि ( महामति ) वोधिसत्व मदिरा मांस लसुन प्याज छ्यापि गृञ्जन दुर्गन्ध वस्तु आमिष भोजन गर्नु योग्य छैन। अधिका बुद्ध वोधिसत्व महासत्व विद्वाँन् आचार्यहरूले पनि भनेर गएका छन् ।

अनार्य दुष्ट दुर्गन्ध मकीर्तिकर मेवच ।

क्रव्याद भोजनं मांसं ब्रुहिच भक्षं महामुने ।

हे महामुनि ( महामति ) वोधिसत्व आर्यगणहरू अयोग्य दुष्ट दुर्गन्ध वस्तु कीटाणु आदि सहित अकीर्ति योग्य नभएको मदिरा मांस दैत्य भोजन नगर्नु भनि आज्ञा गर्नु भए ।

भक्षमाने च येदोषा अयक्षेंतु गुणाश्च यैं ।

महामते निवोधत्वं ये दोषा मांस भक्षणे ।

जस्ले बुद्धचर्यमा मांस प्रयोग गरि खान्छन्, तिनीहरूलाई दोष हो पाप लाग्छन् । प्रयोग नगरि खान्दैन त्यस्लाई गुण हो पुण्यले युक्त हुन्छन् ।

जस्ले मांस खाये दोष लाग्छन् भन्ने ज्ञान, हे महामति बोधि सत्व तिमिले राम्रो बुझ्नु ।

## व्रतावदानमाला प्रथमाऽध्याये

मत्स्य मांसं मद्यपानं स्त्रीणां संघ पिवर्जयेत् ।
उपोषभेड्पि सद्धर्मे समाप्तं प्रति पालयेत् ।

आमिष दुर्गन्ध बस्तु माछा, मांस, मदिरा आदि बुद्ध पूजादिमा शेवन र स्त्रीहरूको संभोग–स्त्रीका पुरूषहरूको संभोग गर्ने काम त्याग गर्नु पर्छ।

उपोषध सद्धर्म बोधिचर्य्या व्रत स्वयंभू त्रिरत्न पूजादि चर्य्य अष्टमी दिन करूणामय व्रत, चैत्य व्रत, तारा व्रत, बसुन्धरा व्रत आदि शुभकार्य दिनमा आरंभ देखि समाप्त संम यस्तो शुद्ध शील पालन गर्नु योग्य हुन्छ ।

## कपिदा वदान ६ अध्याये

कौमारीं पूजनं कृत्वा शेषान्नच प्रभुं जयेत् ।
दधि सर्कर संयुक्तं पंचामृत सुभोजनम् ।
गणचक्रं ततःकुर्याद्विधिज्ञ स्तद्विधि यथा ।
अहोरात्र व्रतं पुण्यं अन्यथा नभविष्यति ।

दुर्गन्ध मध्य मांसाहार गर्ने लोभ ललाचले स्वर्गलोक देखि योगिनी मर्त्य लोकमा आउनु भएका होईन, अहिंसका योगिनी रूप संध कुमारी पूजादिमा पनि दहि सखर (चिनि) मह दुत् ध्यौ (पंचामृत) संयुक्त अष्ट मंगल चिन्ह रोति, फल नैवद्य क्षीर भोजन आदि चढाई पछि यस्तो सुगन्ध शुद्ध वस्तु प्रसाद थहराई भोजन गरेको शेष (बाकि भएको) सबै व्छासे उग्रचराडी देवीलाई समरपण गर्नु । न्यवारी भाषाले कलं व्छयगु भन्छ ।

एवंरीतले अहोरात्र व्रत बुद्ध चर्य इत्यादी को नियम पालन गर्ने एक गृहस्थि ब्यवहारको बज्रयानचर्य्य द्वारा पुण्य प्राप्त गर्नु विधान वोध गर्नु ।

तभिन्न विवध प्रकाको भैरव चक्र द्वारा (पछि मात्र आएको थिति) मदिरा, मांसाहार स्वर्थी व्यवहारको आहार पूजा मात्र हुन्छ, सद्धर्म बुद्धचर्य्य हुन्दैन ।

## बज्रयोगिनी वचन

बज्रयान बज्रवाही कल्प तंत्र १३ पटलमा,

बुद्ध पूजादि सर्वेषु पिवन्ति सुर पानयाः ।

उद्यानं वापिकातीरं विश्रामं गमनादिना ।

बुद्ध पूजा आदि सर्वमा सुर (देवता) पानयाः (देवीहरू) ले पंचामृत चढाई प्रसाद रूपि अमृत हो दुत् पान गर्दछन् । नन्दनवगीचामा, अथवा अरू सून्य वनमा नदीमा पूजा विषय बिश्राम गरि गमन गर्नु हुन्छन् ।

## चक्रसम्बर वचन

सम्वरोदयतंत्र १३ पटले,

पूजयेतपंचामृतं युक्तं नृत्य गीत सुखोत्सवैः ।

चतुर्द्वारे स्थिता देवीं भावये देवता सदा ।

पंचामृतले युक्तगरि बज्रयान तंत्रचर्यको गुह्य पूजामा नृत्य गीतले सुख उत्सव द्वारा चार दिशामा रहेका (बस्नु भएका) दाकिनो, रामा, खणरोहरु रूगिणी, देवीहरुलाई पनि सर्वदा पूजागरि भक्ति गर्नु सिद्धि प्राप्त हुन्छन् । अरू मद्य मांसले असिद्धि मात्र प्राप्त हुनेछन् ।

सम्बरोदयतंत्र २५ पटले

उत्तमं शीर्षगंसर्पि मध्यमं नलिका भवं ।

अधमं मांस संभूतं रसायणो विधोत्तमम् ।

शिर स्वरुप उत्पति भएको ध्यौ राखि पूजा गरेको उत्तम छ। नाभि स्वरुप उत्पति भएको महराखि पूजा गरेको मध्यम छ। खुट्टा स्वरुप उत्पति भएको मांस राखि पूजा गरेको अधम (तल) पुगेको हुन्छ । एवं रसायण विधिले उत्तम क्रिया जान्नु ।

## दिशि पूजा प्रमाण

### बृ० स्वयंभू पुराण ३ अध्याय,

अभिष्येकं पुराकृत्वा नेत्रेलेपं प्रकुर्वीति ।
मजुदेवेन मादेन पिवेत्तम्याऽमृत पयः ।
पत्नीभ्यां सह संगेन पिवेच्च अञ्जलि त्रयम् ।
प्रथमञ्च पिवेत्स्वेन पत्नीभ्यांच ततोददौ ।
वज्रोदकं दशम्यांतु ये पिबन्त्यञ्जलि त्रयं ।
मानब्य मानवाश्चापि वांछितं फल लप्स्यते ।

वज्रयान रहस्य पूजा, तंत्रयान गुह्य पूजा, सहजयान शून्य पूजा, यो ३ श्रावक, प्रत्येक महायान, एक गठ्ठाभयेको स्वयंभू बुद्ध पूजा पनि भन्दछन् ।

त्रेतायुगमा नेपाल देश निर्माण गर्नाका निमित्त प्रथम तंत्र यान पूजा द्वारा अञ्जनाभिष्येक नेत्रमा मोह्नो सिन्धूर तेल मिलाई अंजन लगायेर महामंजुश्री गुरूले प्रशन्न चित्त भयेका हर्षले पंचामृत युक्त दुत् पूर्ण गरियेको त्यो अमृत पान गर्नु भया । पछि वरदा प्रमदा (केशिनी उपकेशिनी) २ पत्नीका वीचमा (माळमा) वसी २ हात् जोरियेर अंजलि द्वारा ३ पतक अमृतपान गर्नु भयो ।

पैले आफुले, पछि २ पत्नीलाइ पंचामृत युक्त दुत् अमृत पूजाको प्रसाद दिनु भयो ।

यो वज्र उदक वज्रयान पूजाको पंचामृत संयुक्त जल प्रसाद दुत् विद्वाँनहरूले ३ पतक पान गर्छन् तिनिहरूलाई मनोरथ सिद्धि प्राप्त हुन्छन् ।

उक्त पूजा क्रमशः नेपालमा बुद्ध मार्गीहरूले मंसिर कृस्न दशमीका दिन दिशि पूजा भनि गर्दै आयेका छन् ।

तथागतगुह्यक (गुह्य समाज तंत्रराज) १ पटले

एवं मया श्रुत मे कस्मिन् समये भगवान् सर्व तथागत काय वाक् चित्त वज्रयोषी भगेषु विजहार ।

यस्तो मैले सुने, एक समयमा भगवान् वज्र सत्व सवै तथागतहरूको काय वाक

चित्त स्वरूप भयेका वज्र योगिनो समान् ६४ पत्रले युक्त सुन्दर पद्म (कमल) मा विराजमान् गर्दा भये।

त्यस वखतमा असंख्य गुह्यकादिगण वोधि सत्वहरूको समूहमा अक्षोभ्य पुत्र बज्र पाणि बोधि सत्व (गुणाकर) लाई अघाडिमा राखि वज्रयानोपदेश गर्नु भये। योहो निश्चित अर्थ संध्याभाष।

असंख्य गुह्यगणका सन्मुखमा वज्रयोगिनीका भगमावसी उपदेश गर्ने वज्रसत्व वज्रयोगिनी २ लाई भन्दा, यस्तो सन्ध्याभाषछोरि अनिश्चित अर्थ लेखनेलाई घ्रिणि लाग्दो लाज लाग्ने संभावना हुन्छ।

सम्वर आदि नामले देवीसंग वसी दर्शन दियेको नानाप्रकार सवै वज्र सत्वको इन्द्र-जाल (चटक) जस्तो मात्र हो अरू होइन।

द्वितीय भाग गुह्य समाज तंत्र २० पडले

भगवन् श्रोतु मिच्छामि वाख्य मुद्रातु लक्षर्ण।
सन्ध्याभाष किमुच्येत भगवन् व्रुहि निश्चितम्।

भो भगवन् वज्रसत्व ! वाक्य मुद्राको लक्षण सुन्नु ईच्छा भयो सन्ध्याभाषको यथार्थ अर्थ कस्तो हो कसरी बुझ्ने। भगवन् निश्चित रूपले आज्ञा गर्नु होस्।

गुह्य समाज तंत्र १७ पटले

विण्मूत्र श्लेक्ष्म रक्त च पंचमं शुक्र मेवच।
पंचामृत मिदं पिण्डं ततोवज्रोस्वि होच्यते।

| विपरित संस्कृत अर्थ | | | निश्चित सन्ध्या भाषा अर्थ | |
|---|---|---|---|---|
| विण् | दिशा मल | १ | गाईका | दहि |
| मूत्र | मूत्र पिसाप् | २ | " | दुत् |
| श्लेक्ष्म | कफ | ३ | | सखर चिनि, |
| रक्त च | रगत् | ४ | | मह |
| शुक्र | वीज | ५ | " | घ्यौ |

यो विपरित अनिश्चित संस्कृत अर्थ छोरी - निश्चित सन्ध्या भाषा तंत्रको अर्थ बुझी, यस्तो पांच प्रकारको शुद्ध वस्तु मिलाई यो वज्रयान पूजादिमा पंचामृत हो शुद्ध पाँच अमृत सेवन गर्नु पर्छ भन्ने सन्ध्याभास अर्थ वज्र सत्व भगवान्ले आज्ञा गर्नु भए ।

तंत्रमा– अनिश्चित अर्थ लिंग १ भग २ विण् ३ मूत्र ४ श्लेक्ष्म ५ (कफ) रगत् ६ शुक्र (वीज) ७ मांस ८ तद्य ९ नर १० मत्स्य ११ सर्प १२ महामांस १३ आदि शब्दको अर्थमा यसरी बुझ्नु ।

तंत्रमा निश्चित अर्थ, सन्ध्याभाषले क्रमशः– (१) लिंगको अर्थ वज्र, (२) भगको अर्थ कमल पद्म शंख ढुंगा आसन, (३) विण् मलको अर्थ गाईका दहि– (४) मूत्रको अर्थ गाईका दुत्– (५) श्लेक्ष्म, कफको अर्थ सखर चिनि– (६) रगतको अर्थ मह– (७) शुक्रको अर्थ गाईका घ्यौ– (८) मांसको अर्थ वोका पयाक्नु पर्ने फल– (९) मद्यको अर्थ नरिवल भित्रको जल– (१०) नरको अर्थ कुण्ड पुष्प [दुभ]– (११) शिरको अर्थ- जटावाल नरिवल, वेल आदि फल– (१२) मत्स्य माछाको अर्थ कूश-- (१३) सर्पको अर्थ कपास-- महामांसको अर्थ कस्तुरि, कपूर, शींल, शाल धूप, पुनः प्रमाण छ– महामांस शालिजं प्रोक्तम् इत्यादि-- मार्सी चावल दुत् आदि पंचामृत युक्त पाक भयेको क्षीर [भात] पायसलाई महामांस भन्दछन् । यज्ञ होमाचरमा पकाउने क्षीर [भात] लाई पनि महामांस भन्छ । अतः नराहुतिको अर्थ– मानिस होमगर्ने होईन, कुण्ड पुष्प दुभ होम गर्ने ।

मत्स्याहुतिको अर्थ माछा होम गर्ने होईन, कूश होम गर्ने । सर्पाहुतिको अर्थ सर्प होम गर्ने होईन, कपासको वनाई होम गर्ने । मांसाहुतिको अर्थ मासु होम गर्ने होईन, कस्तुरि, कपूर, शील, शाल धूप यो चार थोक सुगन्ध वस्तु मिलाई गोलि औषधी जस्तो गरेर होम गर्नु । कन्हपाचार्य सिद्धाले कोलाईरे गीत [चचा] रचना गरेको छ । चउसम कस्तुरि कर्पूर शिल्हाय् शील । यो ४ थोक वरावर भाग मिलाई १०८ गोलि वनाएर होम गर्ने । शिराहुतिका अर्थ कोहि प्राणिको शिर

कपाल होम गर्ने होईन, जटावास नरिवल बेल विमिराफल ज्यामीर फल, अमला वयेर हर्रो वर्रो आदि फल होम गर्ने ।

अघि रत्नकोश नगरमा रत्नकेतु राजाले नराहुतिको अर्थ वालक मानीसहरू होम गर्नाले बिघ्नोपद्रव हुंदा पछि कुण्ड पुष्प दुभ होम गर्ना साथै विघ्न शमन भए।

नेपाल ल. पु. फरपिङ ग्राम वज्रयोगिनी संनिधान नारायण स्थानमा वसी वदि याना चार्यले मत्स्याहुतिको अर्थ माछा होम गर्दा विघ्न भयेर पछि मत्स्यको अर्थ कूश होम गर्ना साथै उक्त विघ्न शमन भएर गए।

तंत्रमा निश्चित सन्ध्याभाष अर्थ छोरि, अनिश्चित संस्कृत अर्थले काम गरे असफल भएर पछि पागल हुने छन् ।

जस्तैः-- तंत्र प्रमाण, करवीर ३ पटले

गुरु भन्छ-- किं त्व मुत्सहसे वत्स, विण मूत्रादि भक्षणाम् । के तिमि हे शिष्य! १ दिशा, मल मूत्रादि खानुमा, इच्छा छ, शिष्य भन्छ छैन । यो अनिश्चित संस्कृत अर्थ । निश्चित सन्ध्या भाष अर्थले गुरु भन्द छन् । हे शिष्य ! के तिमि दहि दुत् खानुमा इच्छा छ ? शिष्य भन्छ– अत्यन्त इच्छा छ ।

विण् मल [दिशा] मूत्र पिसाप् यो संस्कृत अर्थ छोरि विण् दहि, मूत्र दुत्- यो सन्ध्या भाषले अर्थ गरिकन मात्र राम्र बुझ्नु पर्छ ।

जस्तै-- शिव तंत्रमा उल्लेख छ ।

भग लिंग समायोगं तद्दिने शिव पूजनम् । इत्यादि-- अनिश्चित संस्कृत अर्थ- भग लिंग जोरि शिव पूजा गरे सिद्धि मिल्छ।

निश्चित सन्ध्याभाष अर्थ--

भगाकार त्रयोदश्यां लिंगाकार चतुर्दशी ।
भगलिंग समायोग तद्दिने शिव पूजनम् ।

भग शब्द योनि हो, यो संस्कृत अनिश्चित अर्थ छोरि, निश्चित सन्ध्याभाष अर्थ त्रयोदशी तिथि लिनु ।

लिंग शब्द पुरूष चिन्ह हो, यो संस्कृत अनिश्चित अर्थ छोडि निश्चित अर्थ सन्ध्याभाषले चतुर्दशी तिथि लिनु ।

भग लिंग समायोगं– भन्ने अर्थ त्रयोदशी तिथि सकेर चतुर्दशी तिथि लाग्नासाथ त्यस दिन अथवा रातमा शिव स्वरूप भैरव पूजा गरे सिद्धि मिल्छ भन्ने अर्थ ठिक हुन्छ। यसरी सन्ध्याभाष अर्थ बुझेर काम गरे पागल हुन्दैन् ।

यसरी अर्थ नबुझेर काम गरे, पछि पागल हुने संभावना हुन्छन् ।

चक्र सम्बर वचन, सम्वरोदय तंत्र २६ पटलमा मांस अर्थ

मद्यं मांस विना पुज्यं होमंचैव विना घृतं ।
सऽगु रूंच विना धर्मम् विना धर्षेण मुक्तिदम् ।

१ मदिरा मांसले विना पूजा हुन्दैन, २ सऽगुरूले विना धर्म बुझदैन, धर्मले विना मुक्ति हुन्दैन । घ्यौले विना होम हुन्दैन । साधारण संस्कृत अर्थ, मद्य मदिरा हो, मांस प्राणिको मासु रगत् हो, बुद्धले पंचशीलमा अयोग्य गर्नु भएको मद्य मांस त्याग गरि- सन्ध्याभाषले योग्य गरिएको मांसको अर्थ, बोक्रा र बिउा पयाक्नु पर्ने फल प्रयोग गर्नु । मद्यको अर्थ नरिवलका भित्र रहेको जल (नरिवल पानि) प्रयोग गर्नु, एवं प्रकारले उत्तम सिद्धि प्राप्त गरि अघिको आचार्यहरूले ठुलो प्राति हार्थ देखाई गएका छन् ।

वज्रसत्व वचन, मांस अर्थ, गुह्य समाज तंत्र ३० पटले

एवं विचित्रा भोजनं मद्य मांसं समुदभवम् ।
प्रियाय भोग शुभगः श्री वज्रसत्वः प्रसिध्यति ।
पक्वान्न पन समुद्राक्षा नारीकेलोदकादयः ।
नानाफल विचित्रंच दापयेङ्गण मण्डनम् ।
अनेन गीत मुद्रावै नृत्यंचापि विशेषतः । इत्यादि ।

एवं प्रकारले पूजादि भोजनमा विभिन्न फल उत्पत्ति भएको प्रेम हो- प्रियका निमित्त भोग शुभ हुने श्री वज्रसत्व प्रसिद्ध हुनु भएको छ। मांस अर्थ यो हो पाकेको रूख कटहर, भूमी कटहर, आँप, म्येवा, दादिम, केरा, नासपाति, दाख, प्येस्ता,

छोडा, नरिवल आदि विभिन्न फलहरू गण मण्डल पूजादि स्थानमा चढाई - सोहि वस्तु फल प्रसाद भोजन गरि [खाई] गीत हस्तमुद्राद्वारा नृत्य विशेषरूपले देखाई, श्रद्धाञ्जलि भक्तिले पूजा गरि सिद्धि प्राप्त गर्नु ।

मद्य अर्थ, गुह्य समाजे - क्रिया संग्रहेऽपि

इदंतं नारिकंवारि समयादि क्रमाददेत् ।
समय रक्षणा सिद्धिःपिव वज्रामृतोदकम् ।

काचो नरिवल फलका भित्र पूर्ण भएको पानि स्वरूप जल यो हो समयानुकुल वज्रयान पूजादिमा क्रमशः चढाई समय रक्षणा सिद्धि [रसना, ललना, अवधूति नाडी, ब्रह्माण्ड मस्तिष्क, शुद्ध गर्ने, निमित्त मंत्रद्वारा शोधन सहित भएको उक्त नरिवल फल भित्रको रस हो बज्रयान पूजादिमा शुद्ध अमृत जल स्वरूप पान गर्नु ।]

समय रक्षणा असिद्धि हुने- रसना ललना अवधूति नाडी ब्रह्माण्ड मस्तिष्क अशुद्ध भई पागल तुल्य हुने कुअन्न रस मद्यपान दुर्गन्ध वस्तु त्याग गर्नु ।

सम्बर वचन, सम्बरोदय तंत्र १६ पटले

गोमांसं हयमांसंच हस्ति मांसं तथैवच ।
नर मांसं कुकुरि मांसं ग्राहयेंच्च विचक्षणः ।
पंच प्रदीपमाख्यातं वज्रसत्व वचोयथा ।
दशमी पर्वणी प्राप्ते एतद्वस्तु समीलयेत् ।

| विपरित संस्कृत अर्थ, | | निश्चित सन्ध्याभाष अर्थ, |
|---|---|---|
| गोमांस गाईको मासु | १ | गोमांस गाईको दुध |
| हयमांस घोडाका मासु | २ | हयमांस गाईका दहि |
| हस्तिमांस हाथिका मासु | ३ | गाईका घ्यौ, |
| नरमांस मानिसको मासु | ४ | मह |
| कुकुरिमांस कुकुरको मासु | ५ | सखर अथवा चिनि, |

यी पांच वस्तु संयोग हुंदा पंच प्रदीप (आकूश) बन्दछन् । मांसको अर्थ मासु, मद्यको अर्थ कुअन्न रस गरियो भने, यहां पनि विपरित अर्थले यी पांच बस्तु (मासु)

ग्रहण गर्नु पर्ला ।

अतः विद्वाँन् आचार्यहरूले निश्चित सन्ध्याभाष अर्थ बुझि पंचामृत शुद्ध बस्तु प्रयोग गर्नु योग्य छन् भन्ने वज्रसत्व (चक्र सम्बर) भगवान्को वचन छन् ।

दशमी, चतुर्दशी, औंसि - पूर्णी, पर्वकाल तिथिमा यो पचामृत पाँच वस्तु बनाई देव - देवी गुह्य पूजामा प्रयोग गरि खानु योग्य हुन्छन् । अरू दुर्गन्ध वस्तु अनिश्चित अर्थ मद्य मांस अयोग्य हुनेछन् ।

हे रूकोदय सम्बरोदय तंत्र १३ पटले, चक्र सम्बर वचन--

हरेक पूजादि क्रियामा त्रिरत्न साधन बोधिचित्त चतुर्ब्रह्म विहार धारणा गर्नु पर्ने प्रमाण ।

पुष्प धूपादिना पुज्य क्षमापये दनुत्तरः ।
रत्नत्रये मे शरणं ( यच्छेत् ) बोधिचित्तं विभावयेत् ।

अर्ध्य पाद्य पुष्प, धूप, दीप, गन्ध, रस नैवेद्यादि पंचामृत फल दक्षिणादि रीति मिष्टान्न शुद्ध वस्तुले सहित, अनुत्तर संम्यक संबुद्ध भगवान् (चक्र सम्बर गुह्य देव-देवी) हरूलाई श्रद्धाञ्जलि द्वारा पूजा गरि याचना पाप देशमा अनुमोदना दण्डवत् प्रणाम उप्रान्त क्षमा माग्नु ।

त्रिरत्नमा सर्वदा मेरो काय वाक् चित्तले शरण परेको छु । पुनः बोधिचित्त (बोधिज्ञान) कन बिशेष भावना गर्छु ।

## चतुर्ब्रह्म विहार

१] परहित चित्ता मैत्री, परलाई हित र सुख गर्नु ।

२] पर दुःख विनाश कारणं करूणा, परको दुःख शमन गर्नु ।

३] पर सुःख तुष्टि मुदिता, परको सुःख हेरि सन्तुष्ट हुनु ।

४] पर सत्व मुपेक्षकं उपेक्षा, सबैलाई बराबर देख्नु ।

चण्ड महारोषणवचन, करवीर तंत्र १ पटले

प्रथमं भावयेत्मैत्री द्वितीय करूणा विभावयेत् ।

एवं प्रकारको पंचशील धारणा गर्नु पर्ने प्रमाण धर्म शास्त्र आदिमा बुद्ध वचन धेरै छन् ।

क्रिया संग्रह निशाचक्र पटले पंचामृत प्रयोग–

गिरिगौ ह्वर कुंजेषु महोदधि तटेषु वा ।
उद्याने च वनेवाप्यां निशाचक्रं समारभेत् ।
पंचामृतो पंचशाली पंचबुद्ध मयं शुभम् ।

पर्वत गुफा बृक्ष लहराले बनेको कोठा शून्य स्थान ठुलो नदी तीर्थमा अथवा वगैंचामा तलाउका तीरमा वसि पंचामृत [दुध, दहि, घ्यौ, मह, सखर [चिनि] का रस प्रत्येक पंचशाली नामक [कलश] ११ मा पूर्ण गरि पंचबुद्ध स्वरूप यस्तो शुभ कार्य रातमा एकान्त भएर गुह्य विधि द्वारा रहस्य पूजाको प्रसाद पंचःमृत रस पान गरि सिद्धि प्राप्त गर्नु ।

हे वज्र नैरात्मा विधान वज्रयोगिनी स्तुति

पंचामृत सुरापानं पंचाशाली सुभोजनीम् ।
गोत वाद्य रता नित्यं वन्देतां सुर वन्दनीम् ।

पंचामृतको रस पंचशाली नामका पाँच कलश ११ मा पूर्ण गरिएका वज्रयान पूजाले युक्त पंच अमृत पानगरि सुभोजन गर्नु भएकी, देवतादिले वन्दन गरिएकी यी वज्रयोगिनी देवीलाई म प्रणाम गर्छु ।

हेरूक तंत्रमा दक्षिणाऽभि मुखोयोगी पंचामृत वर्तिकामुखे प्रक्षिप्तः श्री हेरूक पूजां कारयेत् ।

योगी सिद्धाचार्यले वज्रयान तंत्र पूजादिमा दक्षिण दिशामा हेरी शुद्ध वस्तु पंचामृतको औषधी [गोली] वनाएर पहिले मुखमा राखि पछि यथाक्रमले पूजागरि गीत वाद्य नृत्य सहित हस्त मुद्राले साधन द्वारा आफ्नु कार्य सफल गर्छ ।

मद्य पान शोधन

हकार हरिते वर्ण होकार गन्ध नाशनं ।
ऱ्हींकार वीर्य हन्ताचा मृताकारन्तु भावयेत् ।

हकार वीजाक्षर (मंत्र) ले हरियो वर्ण हुने । होकार वीजाक्षर मंत्रले दुर्गन्ध नाश हुने ।। ह्रौंकार वीजाक्षर (मंत्र) ले प्रमत्त हुने अहंकार शमन गर्ने । एवं विधानले शोधन भएको अमृत भावना गरि करपात्र (हाट्) मा राखि ३ पल्ट आकाशमा तर्पण दिएर निःस्वार्थीले जिब्रोमा राखि पान गर्न सके मात्र सिद्धि मिल्छ । यसरी गर्न नसके असिद्धि मिल्छ भन्ने उल्लिखित छन् ।

तंत्र वज्रयान वज्रसत्व वचन

भूचर भूमीमा हिड्ने मृग । खेचर आकाशमा उड्ने तिटर । जलचर पानिमा हिड्ने माछा । इत्यादिको मांस पूजादि मंत्र द्वारा शोधन युक्त भएको मिःस्वार्थीले १ लालको प्रमाणले खाए दोषले लिप्त हुन्दैन ।

यो बिधि तिब्बतका विद्वाँन् लामा गुरूहरूले गर्दै आएका छन् । नेपालमा वौद्ध गुरूहरूले वर्तमान् यो विधि गर्न सकेन ।

चित्र विंशति अवदाने – अहिंसा प्रमाण–

अहिंसा परमो धर्म अहिंसा परमो गतिः ।
अहिंसा परमं ज्ञान महिंसा परमं पदम् ।

अहिंसा (प्राणि नमार्ने) उत्तम धर्म हो । अहिंसा उत्तम गति मिल्ने हो । अहिंसा उत्तम ज्ञान हो । अहिंसा उत्तम पद मिल्ने हो ।

तथागत भगवान् बुद्ध करूणाको अवतार भन्ने संसारमा प्रसिद्ध छ । बुद्धले पंचशीलमा प्राणातिपातः वेरमणी, अर्थात् प्राणि हिंसा देखि विरक्त हुनु सक्नु पर्छ, अहिंसा पंचशीलको एक महत्वपूर्ण अंग हो, त्यसकारण हिंसा कर्म त्याग गर्नु उत्तमोत्तम कर्तव्य छ भन्नु भए ।

भगवान् बुद्धको सहस्र १००० जातक मध्ये वर्तमान नेपालमा धेरै प्रचलित भएको ३२ (वतीस) जातक क्रमशः ग्रन्थ सहित संक्षिप्त रूपले उल्लेख गरेको नामावली ।

सत्ययुगमा जन्म ११

नं. १ रूपावती स्त्री, पछि रूपावत पुरूष देह प्राप्त गरि राजा समेत् भएकोले रूपावत नृप जातक हुन आये ।

जन्मभूमी उत्पलावती नगर, माता पुष्पावती देवी, पिता उत्पल सार्थवाह, ब्राह्मणजाति कर्म भोगले गर्दा गर्भावस्थामा आफ्नु पुरूष मरेका विधवा स्त्री एउती खानु पिउनु लाउनु गृहवास नभएकी दारिद्रीले पातिमा वसी छोरा जन्माई भोक लाएका पीडाले आफुले भरखर जन्माएका बालक मारी मासु खाने प्रयास गरेको, रूपावती स्त्रीले देखेर वालकलाई वचाउनु आमाका भोक लागेका प्यास दुःख हताउने निमित्त करूणाचित्तले आफ्नु स्तन मण्डल २ शस्त्रले काति सोहि सूतिका स्त्री दारिद्रीलाई खाई उपकार गरि मैत्री वल देखाए। यो कुरा महज्जातक २२ अध्यायमा छ । १ ।



नं. २ सुप्रभास नृपजातक, जन्मभूमी प्रभास नगर, माता चन्द्रावती, पिता चन्द्र प्रभास, स्त्री वाग् देवी, क्षत्रि जाति, चन्द्रप्रभ नृपले धेरै मानवहरू (प्राणि) लाई भय त्राश दुःख पीडा दिएका मत्तहा हात्तिहरूलाई दमन गरि मानवहरूको पीडा शमन गरि शान्त गराई दिए । यो कुरा-म-जा-माला दिव्वा वदान पुनः कल्पलटा २ अध्यायमा छन् । २ ।



नं. ३ पुण्य वल नृप जातक, जन्म भूमी वाराणसी, माता बुद्धि देवी पिता ज्ञान वल, स्त्री ज्ञानवला देवी, क्षत्रि जाति, व्याधा रूप लिएर आएका मार सैन्य पाँच-जना आई सद्य मासु, रगत् खानुमा धेरै प्यास लाग्यो तपाईले दिन सक्नु हुन्छ भने दिनुत् भनि कराउन आएकालाई करूणाचित्तोत्पत्ति गरि अरू प्राणिलाई घाटक नगरि आफ्नै शरीरको मासु आफै शस्त्रले काति स्वमांस रगत् दान दिएर खवाई तृप्त गराई पठाएर पछि आफु स्वर्गवास जानु भए। यो कुरा-म-जा-मा- ३६ अध्याय-मा छ।



नं. ४ धर्माकर नृप जातक, जन्म भूमी काशी देश, माता सुदुर्लभा देवी, पिता ब्रह्माकर, स्त्री धर्मावती देवी, क्षत्रि जाति, देशको धेरै ठाउँमा जल बृष्टि नभएकोले देश वासीहरू भोग र रोगले पीडित प्राणिहरूको खानु पिउनुमा हाहाकार हुंदा धर्माकर राजाले धेरै धन खर्च गरी पुण्य गरिकन धर्मो पदेश ठाउँ ठाउँमा गर्न लगाई पुण्य द्वारा जल बृष्टि गराई सबैको दुःख हताई आनन्द गरिदिए। यो कुरा-म-जा-मा ३७ अध्यायमा छ । ४ ।



नं. ५ दुर्धन नृप जातक, जन्म भूमी दुर्धन नगर, माता लब्धावती, पिता लब्धभूप, स्त्री सुचिरा देवी, क्षत्रि जाति, आफ्नु देशमा १२ वर्ष सम्म अनाबृष्टि भै हाहाकार दुःख भएकोले प्रजागण अन्यत्र देशमा वस्न गए । पशु पंछीहरू पनि धमाधम हीन भएर गए। वनमा भएका पशु पंछीहरूलाई भोगले ज्यादै पीडा भएको सहन नसकि, राजा दुर्धन कति पनि विर्चचित नभई वनमा कराईएका पशु पंछीहरूलाई तृप्त गर्ना निमित्त आफु वनमाग पर्वतवाट आफै खसी प्राण त्याग गरी पशु पंछीहरूलाई मासु रगत् खवाई आफु स्वर्गवास जानु भए। यो कुरा-म-जा-मा ३८ अध्यायमा छ । ५ ।



नं. ६ प्रदीप प्रद्योत नृप जातक, जन्म भूमी केतुमती नगर माता दिव्यावती, पिता दीपप्रभ, स्त्री सुप्रभा देवी, ब्राह्मण जाति, वनमा तप गर्न जादा राक्षसले एक मनुष्यलाई मारी मासु रगत् खानु ठिक गरेको। फेरी एक डाका चोरले एक वणिज व्यापाद गरी आएकालाई मारी धन लुतेर लिन खोजेको देखि राक्षस र डाका चोरलाई दमन गरी मरणमा ठिक भई सकेका २ जना मनुष्यलाई पनि प्राण वचाई पछि यथाशीघ्र तप पूर्ण गरि स्वर्गवास जानु भए । यो कुरा-म-जा-माला ३९ अध्यायमा छ । ६ ।



नं. ७ अम्बर नृप जातक– जन्म भूमी वरद नगर– माता दीप्ता देवी. पिता

जम्वर राजा, स्त्री प्रियंवदा देवी, क्षत्रि जाति, आफ्नो दरवारमा वसी दान पुण्य गरि वस्दा एकदिन मार सैन्य राक्षसहरू आई मासु रगत् खानु देउ भनि दान लिन आएका राक्षस मारहरूलाई अरू प्राणि हिंसा नगरी स्वशरीर काती स्वमांस रगत् दान दिई तृप्त गराई दिए। फेरी अरूलाई पुगेन खानु ल्याउ भन्न आएका राक्षस मारहरूलाई– सो राजाका स्त्री पुत्र पुत्रीहरूले समेत् पिताले गरे जस्तै आफ्नु शरीरको मासु रगत् दान गरी खवाई तृप्त गराई दान पारमिताले पूर्ण गरि सबैं मृत्यु भई स्वर्गलोक (त्रायत्रिंशाभुवन) मा आनन्दसंग वास वस्न गए। यो कुरा-म-जा-मा ४२ अध्यायमा छ। ७ ।



नं. ८ यक्ष राजा जातक, जन्म भूमी उत्पलावर्दी नगर, माता शान्तवती देवी, पिता यक्षेश्वर, स्त्री क्षान्तिवती, क्षत्रि जाति, । नित्य हिंसक यक्ष राक्षस दैत्य ब्याधा एवं अरूले पनि पशु पंछी प्राणीहरूको मांस रगत् मदिरा आहार गर्न क्रोधी मूढहरू-लाई करूणा चित्तले धर्मोपदेश द्वारा दमन गरि- पंचामृत आहार द्वारा सद्धर्ममा राखि सज्जन गराई दिए। यो कुरा-म-जा-मा ४४ अध्यायमा छ। ८ ।



नं. ९ शिवि राजा जातक, जन्म भूमी कोशलावती नगर (घोषवती नगर) पनि भन्छन्। माता शक्रावती, पिता शक्रकल्प, स्त्री सटी लक्ष्मी देवी, क्षत्रि जाति, तप गर्दा भेश धारी इन्द्र (मार) आई आँखा झिकिकन दानदेउ भन्न आएको वचन पालन गरि आफ्नु आँखा २ आफैले झिकि दान दिई सन्तोष गराए। यो कुरा-म-जा-मा ४ अध्यायमा छ। ९ ।



नं. १० मैत्रीवल कुमार जातक, जन्म भूमी केतुमती नगर, माता प्रभावती, पिता ज्ञानवल राजा, स्त्री मित्रा देवी, क्षत्रि जाति, केहि समय वेद धर्म यज्ञ हो मार्चन गरि वस्दा १ महिना उप्रान्त निमन्त्रणामा आउने ब्राह्मण-याचक-महात्मा, साधु-योगी, भिक्षु-बृद्ध-बृद्धी, वालक-दरिद्रहरू आउने सबैलाई दान गरि निरामिष भोजन द्वारा

तृप्त भोजन (सन्तोष) गरि आशीर्वाद लिई वसेको वखतमा एकदिन मार कर्मले गर्दा यक्षगण (राक्षस) हरू पाँचजना मनुष्यरूप भेशगरि आएर दानलिन आए छम् ।

दानगरि सावीक निरामिष भोजन गर्दा असन्तोष भइ यो देव मनुष्य ऋषि योगी आचार्य भिक्षु व्राह्मणादिहरूको राज भोजन हो, हामीहरू मनुष्यको भेश मात्र हो, यक्ष राक्षसहरूको जाति हुन् । मदिरा अथवा मांस रगत्ले मात्र सन्तोष हुन्छन् दान दिनु होस् भनेका बेलामा, सबै आश्चर्य भएर वसेको वखतमा, मैत्रीवल कुमारले यिनीहरू मार सैन्य अवश्य हुन् भन्ने ठहराई–आफ्नु शरीरमा आफैंले शस्त्र द्वारा काति मासु रगत् मार सैन्य यक्ष राक्षसहरूलाइ दान दिई खवाई सन्तोष गराई आफु स्वर्गवास गए । यो कुरा-म-जा-मा ४८ अध्यायमा छ । १० ।



नं. ११ कवि कुमार जातक, जन्म भूमी कांपिल्प नगर, माता सुधर्मा देवी, पिता सत्यरत राजा, विवाह् गरेको छैन, जेठी आमा सत्यधर्मा देवीका पुत्र अल्लोल मंत्र दाजुको कुनीति द्वारा भाई कवि कुमार वालावस्थामा अकालले मरण हुन तयारि हुंदा आफ्नु भक्ति र आमाको धर्मले १२ वर्षको उमेरमा श्री मदार्यावलोकितेश्वरको सुदृष्टिले विद्याधरी योगिनी तर्फ रक्षा भई अकाल मृत्युवाट मुक्त भएर पछि राजा समेत् भई परोपकार मार्गमा भ्रमण गरि स्वर्गवास भए । यो कुरा व्रतावदान माला ९ अध्यायमा छ । ११ ।

### त्रेतायुगमा जन्म–१०

नं. १२ चन्द्रप्रभ नृप जातक, जन्म भूमी भद्रशिला नगर, माता धर्मरती, पिता सुधर्म राजा, स्त्री चन्द्रावती देवी, क्षत्रि जाति, चन्द्रप्रभ नृपले दानशालामा वसी आफुसंग भएको वस्तु जस्ले जेमागे पनि दिई रहेको थियो । त्यसवेला इन्द्रले रौद्राक्ष नाम ब्राह्मण मितलाई कुरा सिकाइ उनी कहां पठाइदियो । इन्द्रको शिकाएतमा आएका रौद्राक्षले चन्द्रप्रभ नृपलाई सत्य कराल गराई उमको शिर दान मागे ।

सत्यवादो नृपले प्रजागणहरूलाई वोध गराई आफ्नो परिवारलाई अनित्यताको सद्धर्मोपदेश द्वारा संझाई बुझाई दिए।

अनि शस्त्रले आफ्नो शिर आफैंले काटी जगत् हित् गर्ने आशिका गर्दै भेशधारी रौद्राक्ष राक्षसलाई दान दिए। यसरी विश्वमा जो कोहिले गर्न नसक्ने दुष्कर चर्य गरि दान पारमिता पुरा गरो परलोक हुनु भयो। यो कुरा म-जा-मा ४९ अध्यायमा छ। १२।



नं. १३ धर्मपाल राज कुमार जातक, जन्म वाराणसी, माता दुर्मती रानी, पिता ब्रह्मदत्तेश्वर राजा, क्षत्रि जाति, बाह्र (१२) वर्षको उमेर, अविवाहित छंदै राजकुमारलाई माता दुर्मती रानीले कुविद्या सिकी दुर्गा (भगवती) देवीलाई पुत्र भोग दिन लाग्दा, उक्त कुरा राजकुमारलाई थाहा भयो। उनले शस्त्र द्वारा आफ्ना गला आफैंले रेटी कामिरहेकी आमा दुर्गादेवोलाई रगत् खुवाई आमाको मनोरथ पूर्ण गरि दिए। आफ्ना प्राण प्रिय एक पुत्र यसरी गुमाउनु परेकाले राजा शोकले पिडित भए। दुर्गादेवी कोप भईन्। क्षमामा विट्टन भयो। राजाले अनेक धर्म कर्म गरि देशमा पुनः शान्ति स्थापना गरे। यो कुरा शतकावदान ३२ अध्यायमा छ। १३।



नं. १४ मैत्री कंन्यक कुमार जातक, जन्म वाराणसी, माता कुलानीं, पिता सुमित्र सार्थ वाह, (महाजन साहु) राजकुमार अविवाह छंदै परदेश गए। संयोगवस उनी यमलोकमा पुग्न गए। त्यहां एक स्थानमा मातृ पितृ द्रोही (बुढा बुढी भई सकेका आमा बाबुलाई दुःखदिने) उनीहरूलाई नदेखाई मिठो राम्रो जति आफु मात्रै खाने, एउटा पापिको शिरमा अयोमय चक्र घुमाई सासना दिई राखेको उनले देखे। यस दृश्यले मैत्री कंन्यक कुमारको मनमा दया उत्पन्न भयो। उनको हृदय करूणाले भरीयो, उस्को त्यो मर्म वेदना (दुःख) हटाई दिन अगाडि सरे। राजकुमार पनि



उनीहरूले दिएको मर्म दुःख सत्कार ग्रहण गर्दै पापिहरू दुःखवाट मुक्त हुन सक्ने उपदेश दिए। यमराजलाई पनि पापि दुःखिहरू माथि दया करूणा राख्नु पर्ने कुरो वोध गराई आफ्ना निवास स्थानमा फर्क। राजदरवारमा आफुले एक मातृ पितृ द्रोही पापिलाई सासनावाट मुक्त गराएको कुरा सबै परिवार सहित प्रजागणलाई सुनाएर आफु अर्को भलाई गर्नमा अग्रसर भई जन्म विताए। यो कुरा शतकावदान ३५- भद्रकल्पावदान २८ अध्यायमा छ। १४।



नं. १५ सर्वज्ञ मित्र पादाचार्य जातक, जन्म पद्मपुर देश, माता गुणवती, पिता गुणशील, जाति वैश्य (श्रेष्ठ) रत्न कोशवती देशका राजा रत्न केतुले आफ्नो भलाईका निमित्त तीर्थिकाचार्य ब्राह्मणहरूले बताएको उपदेशले, रत्नदेह वालकको अकाल मृत्युले पीडित हुने नराहुति यज्ञ थाले। नराहुति यज्ञ विघ्न भई देशमा हाहाकार नानोपद्रव मचिए। महामारी रोग फैलिएर मानीसहरू दिन दिन धेरै मर्न थाले। देशमा अशान्ति मचियो। यस्तो विपरित दुःख देखि एउटा वालकको मनमा दया उत्पन्न भई उनी ९ वर्षको मात्र थियो। त्यस समयमा क्रकूछन्द भगवान् बुद्ध विहंगम विहारमा विराजमान हुनु हुन्थ्यो। वालक त्यहां सरासर गई बुद्धको शरणमा गए।

यथार्थ देशमा भएको घटना विन्ति चढाए। उसले भगवान् बुद्धको उपदेश अनुसार आचरण गर्दै– सर्वज्ञ मित्रपाद आचार्याऽभिष्येक पद प्राप्त गरे। उसले नराहुतिको अर्थ, मानिसलाई यज्ञमा होम गर्ने होईन–कुण्ड पुष्प–दुभ फुल–एवं कमल आदिले होमार्चन सफल गरि–पंचामृतादि फल रोति क्षीरले सहित घृताहुति द्वारा–आमिष वस्तु मांस-मदिरा वर्जित गरि-अग्नि देवता सन्तोष गराई-नराहुति होम सफल गराई रत्नकेतु राजालाई खुसि पारि देशोपद्रव शान्ति गरि-त्यस स्थानमा स्वयंभूमूर्ति चैत्य स्थापनार्चन गराई-क्रकूछन्द बुद्ध निमन्त्रणादि दान भोजन सिध्याई त्यस स्थानमा सबै राजा प्रजाहरूलाई उपकार गरि नराहुति होम सफल

भई ज्ञानको अनुभव गरे। यस किसिमले भयंकर पापी राजा सौदासलाई दमन गरी करूणा सागर बुद्ध धर्मको उपदेश वाट उद्धार गरे । यो कुरा भद्र कल्पावदान अध्याय ३६– स्वायंभू पुराण अध्याय १ मा हेर्नु होस्–हिंसा मदिरा मांसाहार पाप हो–अहिंसा पंचामृत सुआहार धर्म हो भन्ने ज्ञान राम्रसंग विदित हुन्छ।

⁘

नं. २० सर्वानन्द नृप जातक– जन्म भूमी शालवती नगर, माता जयादेवी, पिता सुरेश्वर, स्त्री सुभद्रा देवी, क्षत्रि जाति। राजा सर्वन्ददले राज्य सुखैश्वर्य त्यागी तपश्चर्य गर्न जंगल तिर लागे। एकदिन इन्द्रले छल गरी नैषाद व्याधाको भेश लिए। एउटा परेवालाई वाजले पछ्याउन लगाए । परेवा मर्ने भयले त्राहिमान भई तप-धारी सर्वन्दद नृपको काखमा शरण गर्न गए। नैषाद व्याधारूप इन्द्र राजाको समक्ष आई ती परेवा उस्का हुन्। उसले खवाई पिवाई पालिएको हुन्। आज परेवाको मांस खाने दिन हो। परेवा दिनु होस् भनी मागे। तपस्वीले शरणमा आएकोलाई मरण गर्न नदिने मनमा निश्चय गरि भने– नैषाद यो परेवा तिम्रै भए पनि प्राण रक्षार्थ यो परेवाको सत्ता। अरू तिमीले जे माग्ने हो माग । व्याधाले ती परेवा भरी तयारि सद्य मासु मागे। तपस्वीले प्राणी हिंसा गरी उसको इच्छा पूर्ति गर्न उचित नगरी आफ्नै शरीरको मासु काटी दिने निश्चय गरी खुकुरी मागे। व्याधाले भने वमोजिम एकातिर परेवा अर्कोतिर आफ्नो मासु काट्दै तराजुमा राखे। नैषादको शक्तिले तपस्वीको जति मासु काटेर राखेपनि परेवाको तौल वरोवर हुन सकेन। तर दृढ प्रतिज्ञा तपस्वी आफ्नो वाचामा कत्ति पनि चित्त विचलित भएन। आज मेरो तपस्या पुरा हुने भयो भनी हर्षले गड् गड् भई आफ्नो संपूर्ण शरीर नै व्याधा-लाई अर्पण गरे।

तपस्वी सर्वन्ददको यस महान् कार्य देखी व्याधा रूप इन्द्र सार्है खुसि भई आफ्नो भूल क्षमा मागे। उसको सत्य वाचा दया देखी अति प्रशन्न भई सहस्र धन्यवाद दिए। उनले तपस्वीलाई देव औषधी द्वारा चांदै निको तुल्याए। राजा सर्वन्दद

पनि पहिले जस्तै दिव्य देह धारण गरी ज्ञान ध्यानको प्रभावले पंचाभिज्ञ पद प्राप्त गरी तपश्चर्या सिद्ध गरे । यो कुरा द्वाविंशति अवदान १२ अध्यायमा व्यक्त रूपले छ । २० ।



नं. २१ सुरूप नृप जातक– जन्मस्थान वाराणसी (काशी देश) माता शोभिता रानी, पिता शोभित राजा, स्त्री सुन्दरीका देवी, जाति क्षत्रि, पुत्र सुन्दरक । सुरूप नृप अत्यन्त दानी थिए । उसले दान शालामा वसी, योगी, संन्यासी, वैरागी, ब्रह्मचारी, भिक्षु, आचार्य, ब्राह्मण, याचक, वालक, बृद्ध, बृद्धी आदिलाई अन्न वस्त्र धन द्रव्यका साथै सवैलाई सन्तोष हुने गरी क्षीर पंचामृतले युक्त भएको भात फल मूलादि रीति दान दिने गर्थ्ये । उनको दान कार्यमा सवै खुसी भई हार्दिक आशीर्वाद शुभेच्छा दिन्थ्ये । एवं रीतले समय वित्दै गयो ।

तर राजाको यस शुभ कार्य देवताहरूले सहन सकेनन् । सुरूप नृपको दान कार्यमा विघ्न पुऱ्याउन इन्द्रादि देवता सहित भेला भई एक योजना वनाए । इन्द्रले पुरूहुत नामक यक्षको भेश वदली अरू चारजना देवताहरूलाई राक्षस रूप लिन लगाई, राजाको समक्ष आई दान मागे । सुरूप नृपले उनीहरूलाई दान दिई भोजन प्रदान गरे । तर उनीहरूले न दान लिए न खानेकुरो नै खाए । नृपले उनीहरूले दान नलिएको नखाएको कारण सोधे । राक्षस रूपी देवताहरूले तो दानवाट तिनीहरू असंतुष्ट रहेको कुरो निवेदन गर्दै राजासंग विन्ति चढाएर सत्य कबुल गराए पछि खुसि भई भने । भो महाराज हजुरले साधु महात्मा भिक्षु मर्हषि मुनिहरूलाई दिनु भएको मनुष्य भोजन हुन् ।

हामी यक्ष राक्षस भएकोले ती भोजन असंतुष्ट छन्– त्यसकारण ग्रहण नगरेका हुन् । हामीलाई त केवल तातो रगत् काँचो मासु सुरापानको आवश्यकता छ । अविलंव दिनु होस्– दिएन भने हामीहरू त्यसै फर्कनेछौं । यस्तो वचन सुनी– राजा सत्य वचन रक्षार्थ आफ्नै शरीरको मासु दान गर्ने प्रयास गरि तयारि भएको देखी–

गरे । यो कुरा विचित्र कर्णिकावदान १० अध्यायमा छ । १५।



नं. १६ सुधनकुमार (जातक) जन्म उत्तरपाञ्चाल देश, माता ब्रह्माणि देवी, पिता धनराज, स्त्री मनोहरा देवी देव कन्या जाति क्षत्रि, सुधन कुमार ऋद्धिवान् पराक्रमी महापुरूष थिए । उनले आफ्ना इच्छानुसार स्वर्ग लोक (द्रुम लोक) सम्म गई आफ्ना पुरूषार्थ प्रदर्शन गर्थ्ये, आफ्ना जन्म भूमीमा प्रजाहरूलाई-मानिसले मानिस भई जिउन के कस्तो कर्तव्य गर्नु पर्छ भन्ने उपदेश दिने गर्थ्ये । उनी भन्दथे– बुद्ध ज्ञान नै करूणा र शान्तिका मार्ग हुन् । बुद्ध र बुद्ध ज्ञान राम्रोसंग चिन्न सक्थ्यो भने मानिस वन्छ, यसरी उनले आजीवन उत्तम ज्ञान मार्ग देखाएर गए । यो कुरा दिव्यावदान १९– भद्र कल्पावदान २९ अध्यायमा राम्रसंग छन् । १६ ।

⁞⁞⁞

नं. १७ सर्वानन्द नृप जातक । जन्म भूमी नेपाल दीपावती नगर, ललितपुर, माता शीलावती, पिता शुशीलानन्द, स्त्री धर्मावती देवी, जाति क्षत्रि ।

सर्वानन्द राजाले दीपंकर भगवान् बुद्ध र वहांका शिष्यहरूलाई दरवारमा निमन्त्रणा गरेर पिण्ड पात्र प्रदान गरे । उनले नेपालमा सवभन्दा पहिले माघ संक्रान्तिको दिनमा सम्यक धर्म गरे । प्रजागणहरूलाई पनि गर्न लगाए । त्यसवेला राजाले भगवान् सम्यक संबुद्धलाई पंचामृत सहितको क्षीर भोजन प्रदान गरेका थिए । बुद्ध वचनानुसार पंचशील छोरि दुशील कर्म राजाले गर्दैनथे । प्रजाहरूलाई पनि लगाउदैनथे । यसरि सर्वानन्द नृपले दर्शाएर गएको सुमार्ग र नियम अद्यापि सम्यक धर्म गर्दा त्यही थिति अपनाइ रहेको छ । यो कुरा कपिदावदान २ अध्याय देखि ८ अध्याय सम्म छ । १७ ।



नं. १८ सुप्रिय सार्थ वाह जातक (एक महाजन) जन्म स्थान काशी देश, माता शशी देवी, पिता प्रियसन, जाति वैश्य (श्रेष्ठ जाति) सार्थ वाह एक धनी महाजन थियो विवाह गर्न भन्दा पहिले उनले आफ्नो प्राणको वाजि लगाई रत्नाकर द्वीपमा



गए। त्यहां वाट रत्नको झण्डा लिई स्वदेश फर्की आपनो घरको कौशीमा त्यस झण्डा गाडी फहराए। चारदिन पछि चौवीस घण्टा सम्म उनको जन्म भूमीमा नव रत्न दृष्टि भयो। त्यसले गर्दा देशका जनताहरूको दरिद्रता दुःख वाट मुक्त भएर उनीहरू सुखी भए। शान्ति संग बस्न थाले।

देशमा सुख समृद्धिको वातावरण पछि सुप्रिय सार्थवाहले शुद्धवती देवी स्त्री विवाह गरे। उनी सद्धर्म प्रेमी र परोपकारी व्यक्ति थिए। उनी सर्वदा बुद्ध धर्म प्रचार गर्नमा व्यस्त रहन्थ्ये। उनले सद्धर्म ज्ञानको उपदेश दिई धेरै जनतालाई शान्ति सुखी तुल्याउनमा समर्थ भए। यसरी उनले सत्य मार्गमा अग्रसर भई सुकर्तव्यमा रही आफू र जनताको भलाईमा जीवन व्यतित गरे। यो कुरा दिव्यावदान अध्याय १२– भद्र कल्पावदान अध्याय ३२ मा हेर्नु होस् राम्रसंग बुझिन्छ। १८।



नं. १९ सुतशोम नृप जातक, जन्म स्थान कौरव देश, माता घृतीमति रानी, पिता महावल राजा, स्त्री अनुन्नति देवी,। जाति क्षत्रि।

सौदास नरसिंह राजा राक्षस स्वभावका थिए। उसले हिंसा कर्म गर्थे। मदिरा मांस नै उसको प्रमुख आहार थियो। यस्तो दैत्य स्वभावका राजालाई ठीक वाटो पहिल्याउन सजिलो कुरो थिएन, तसर्थ उनलाई सुतशोम १ ले वनान्तरमा भेटी ऋद्धिवल देखाई ज्ञान गुणका कुरा सुनाउन थाले पाप कर्म के हुन् बुझाई दिए। विस्तार विस्तार उस्को कुस्वभाव छोड्न लगाए। उसको व्यवहार सप्रे पछि उसलाई बुद्ध धर्ममा दीक्षित गराए। मदिरा मांस छोड्न लगाए। फल मूल पंचामृत क्षीर मात्र उसको आहार गराई दिए।

सौदास राजाले १०७ राजकुमारहरूलाई मार्न वन्दो वनाई राखेको थियो। उनीहरूलाई पनि मुक्त गराई दिए। बुद्ध धर्मको महत्व देखाई तीर्थक धर्मको हीनता छर्लङ्ग पारी दिए। बुद्ध धर्ममा उसको मन फर्क्यो। यसै धर्ममा उसको मन आनन्द

पहिले पुत्र सुन्दरकले, दोश्रो पत्नी सुन्दरीका देवीले, तेश्रो स्वयं सुन्दर नृपले धीरता पूर्वक त्रिरत्न नामोच्चारण गर्दै आफ्नो शरीरको मासु आफैले काटी ख्वाउँदै गरे। असक्त भएपछि संपूर्ण शरीर उनीहरूलाई अर्पण गरी लंपसार परीदिए। एवं प्रकारले सत्य धर्म रक्षार्थ आफ्नो र सपरिवार सहितको जीवन समेत् वास्ता नगरी दान गरे। हेर्नु होस्– द्वाविंशतिकावदान २३ पुनः शतकावदान ३४ अध्यायमा राम्रसंग बोध हुनेछ। २१।



द्वापर युगमा जन्म १०

नं. २२ सुवर्ण वर्ण कुमार जातक। जन्म वैशाली नगर, माता शीलावती, पिता दिवाकर- जाति वैश्य (श्रेष्ठ जाति)। उस जन्ममा विवाह् नगरेकोले स्त्री छैन।

वैशाली नगरमा अजात शत्रु नामक राजाले राज्य गर्दथे, उसको प्रचण्ड नाउँ गरेको मंत्री थियो। मंत्रीले त्यस देशका काशी सुन्दरी नारीलाई उसले भनेको कुरा नमानेकोले तिनलाई गुप्तले मारी, सुबर्ण वर्ण कुमारलाई दोषारोपण गरे। अनि ती प्रचण्ड मन्त्रीको षडयन्त्र द्वारा सुवर्ण वर्ण कुमारलाई श्मशानमा लगी सुरा दिई मार्न लाग्दा ती मारीएकी काशी सुन्दरी स्त्री त्यहाँ देखा परिन् र मलाई मार्ने सुवर्ण वर्ण कुमार होईन। ती दुष्ट प्रचण्ड मंत्री नै हुन्। स्पष्ट भनी दिईन्। यी कुरा सुनी अजात शत्रु राजालाई हुन सम्मको रीस उथ्यो, उनले दुष्ट मंत्रीलाई नै सुरा दिई मृत्यु दण्ड दिन लागेकै बेला सुवर्ण वर्ण कुमारले क्षान्ति धर्म प्रकाश पार्दै राजा संग विन्ति चढाए।

महाराज प्रचण्ड मंत्रीले काशी सुन्दरी स्त्रीलाई मारेको निश्चय हो। उसलाई कानून अनुसार सुरा दिई मृत्यु दण्ड दिनु पनि उचित ठहर्छ। तर भाग्यवस काशी सुन्दरी फेरी बाचिन्। यसकारण उसलाई माफि दिनु राम्रो हुनेछ।

उसको न्यायपूर्ण सविनय अनुरोधलाई राजाले स्वीकार गरे। यसरी सुवर्ण वर्ण

कुमारले आफु निर्दोषी छंदाछदै दोषी ठहऱ्याई मृत्युदण्ड समेत् दिन लगाउने महादुष्ट प्रचण्ड मंत्रीलाई आपना मित्र संझी क्षमा दिई प्राण दण्ड वाट मुक्त गराई दिए ।

कुमारको यस अनुपम करूणा रक्षान्ति कार्य देखी राजा प्रजा सबै खुशी भए। उनलाई सबैले पूजा र प्रशंसा गरे । त्यस दिनदेखि वैशाली र अन्य नगरका अविवाहित स्त्रीहरूले सुवर्ण वर्ण कुमार तुल्य दयालु साहशी योग्य पुरूष तिनीहरूका पति हुन् भनि आशिका गर्ने चलन चले । तर वर्तमानका पुरोहित वर्गले यस्तो कुरा बुझ्नु योग्य छ । यस्को खास अर्थ नबुझेकोले साना साना कन्या केटीहरूलाई (इहि विधि) मा सुवर्ण वर्ण कुमारलाई कन्या दान दिएँ भनी वाक्य पढ्ने थिति वस्यो । फेरी ती कन्याहरू ठुली भई यौवनावस्थामा पुगि सके पछि अरू पुरूषसंग कन्या दान दिई विवाह गरी दिने गरे । अर्थात् हाम्रा पुरोहित आचार्य गुरू वर्गको शिक्षाको कमी र अर्थको अल्पज्ञताले गर्दा आपना छोरी बेटीको कन्यावस्था-मा नै दुई चोटो कन्यादान दिने प्रचलन अद्यापि रहेछ ।

वास्तवमा सुवर्ण कुमार अविवाहित अवस्थामा नै भिक्षु भई शुद्ध ब्रह्मचर्य पालन गरी क्षान्ति धर्ममा रही जीवन विताएका थिए । यो कुरा बुझ्नु ब्रतावदान माला ३ अध्यायमा छ । २२ ।



नं. २३ श्री मट्वाहन नृप जातक, जन्म स्थान धर्मपुर देश, माता सुविलासवती, पिता सत्यवाहन, स्त्री सिद्धि भक्ती देवी, जाति क्षत्रि, श्री मट्वाहन नृप दयालु हृदयका थिए । उनको समयमा करूणामयको भक्ति प्रभाव ज्यादै थिए । अकालले नागहरूको मृत्यु हुन्थ्यो । एक पापी गरूडले दिनको एक एक गरि नाग खाई नाश गर्न लागे । नागहरूको यसरी विनाश भई रहेको कारण थाहा पाई राजालाई दया हुन्थ्यो । नागहरूको रक्षार्थ, श्री मट्वाहन राजाले ती गरूड संग युद्ध गरि उसलाई पराजित गरे । उसलाई आज देखी नागको हत्या नगर्ने सत्य कराल गराई छोडे । यसरी नागहरूलाई अकाल मृत्यु वाट वचाई दिए । श्री मट्वाहन राजाले दया पूर्व

नाग लोकको उद्धार गरे । यो कुरा व्रतावदान माला अध्याय ४ मा छ । २३ ।

卐

नं. २४ जलवाहन राजकुमार जातक, जन्म स्थान धर्म कौशल देश, माता शुद्धधरी, पिता जटिंधर वाहन, बैद्यराज पत्नी जलाम्बुगर्भा, जाति बैश्य ।

दुई पुत्र १) जलाम्वर २) जलगर्भ । जलवाहन राजकुमारको देशमा अटवी-संभव नामका एक पुष्करिणी (पोखरी) मा दश हजार माछा बस्दथे । ती माछा-हरूलाई मार्न पुष्करिणीमा विष छरी व्याधाहरूले लाभ उठाउने योजना गरे। तिनीहरूको योजना जलवाहन राजकुमारले समयमै सुराक लगाए । राजकुमार अहिंसवादी थिए । अतः-- यस हिंसावाट वचाउनु व्याधाहरूलाई दमन गरी- अहिंसा परमो धर्म- को उपदेश दिई संतुष्ट गराए। पोखरोमा विष प्रयोग गर्नको सत्ता माछा राम्रो र हृष्ट पुष्ट हुने आहार योग्य औषधी छर्न लगाई दश हजार माछा-हरूको अकाल मृत्युवाट प्राण वचाई दिए। त्यसपछि जलवाहन राजकुमार हात्ति चढी गाउँ गाउँमा दुली रोगीहरूको सेवा गरे । विना पैसाले रोगीहरूको निमित्त औषधी गरी दिए ।

रोगीहरूलाई एक मित्र पारी उनले ज्यादै- कौशल शास्त्र आदि- सुश्रुत, चरक, वाग्भत, अनेक बैद्य ग्रन्थ अध्ययन समाप्त गरेकाले ऋषि मुनि चिकित्सा, देव चिकित्सा, मनुष्य चिकित्सा, दत्य चिकित्सा साथै सुई दिने शलाका प्रयोग, सल्य चिकित्सा (अपरेशन) शस्त्र चिकित्सा (चिरफाट्) आदि गरी चाहिंदो औषधी वितरण गरि धेरै रोगीहरू निको तुल्याए। आफुले जानेका बैद्य शास्त्र र चिकित्सा शास्त्र अरूलाई पनि सिकाई असंख्य प्राणिको हित र उपकार गरि उद्धार गरे। यो कुरा राम्रो बुझ्नुलाई सुवर्ण प्रभा सोत्तम सूत्र अध्याय १८ मा हेर्नु । २४ ।

नं. २५ पद्म शेखर राजकुमार जातक- जन्म स्थान वैशाली नगर, माता सुमती रानी, पिता भुवनाकर राजा, पत्नी धर्मावती देवी, जाति क्षत्रि, अरू देशको

विजयशेन राजा अत्याचारी भएकोले, पद्म शेखर राजकुमारले उनीसंग मुकाविला गर्न ठुलो वीरता देखाए। उनले आपनो पराक्रमको चमत्कार र प्रातिहार्य दर्शाई मानीसलाई प्रभावित पारे।

विना शस्त्र प्रहार र विना हिंसाले विजयशेन राजा माथि विजय प्राप्त गरे। उसलाई पराजित गरी सकेपछि पद्म शेखर राजकुमारले जनकल्याणको निमित्त अनेक प्रकारका ज्ञान गुणको उपदेश दिई प्रजाहरूलाई खुसी तुल्याए। विद्या दान, अर्थ दान, क्रिया दान, पुस्तक आदि वस्त्र दान दिई अरू शिक्षा दिक्षा दिए।

न्याय पूर्वक सत्युद्ध, धर्म युद्ध वाट विजयशेन राजालाई दमन गरी सकेपछि उसलाई ठीक ठीक वाटो पहिल्याउन दिई उस्को राज्य उसैलाई फिर्ता दिए। यसरी प्रजाःहरूलाई सुख सुविधा प्रदान गरेर गए। यो कुरा विचित्र कणिकावदान ९ अध्यायमा छ। २५।



नं. २६ वीरकूश नृप जातक-- जन्म स्थान काशी देश, माता अलीन्द्रा रानी, पिता ईक्षाकूश, पत्नी सुदर्शना देवी, जाति क्षत्रि।

वीरकूश राजा बुद्धिमान् थिए, उनको पत्नी सुदर्शना देवी माईत बसिरहेको मौका पारी सातजना राजाहरूले लिनलाई हरण गरेर लैजाने योजना गरे। वीरकूश ठीक समयमा हात्ति चढी करूणामयको हृदय मंत्र षड्क्षरिको झण्डा पताका फहराई निश्चित ठाउँमा पुगे। ती निर्वुद्धि राजाहरूलाई घेरामा हाली वाधेर ल्याए। तिनीहरूलाई जानका अनेक उपदेश दिए। उनको उपदेशले सबै राजाहरू प्रभावित भए। पछि ती राजाहरूलाई आपना राज्यमा फिर्ता पठाई दिए। तिनीहरूले वीरकूश राजालाई ठाउँ ठाउँमा सत्कार एवं स्वागत गरि उनको वीरता प्रशंसा गरे। यसरी आपनो बुद्धि र वीरतामा ठुलो सत्कार पाएका राजा वीरकूशले स्वपत्नी सुदर्शना साथै सकुशल आपना राज्यमा फर्की ठुलो प्रशंसाका कार्य सफल गरे। यो कुरा भद्र

कल्पावदान ३० दिव्यावदान १३ अध्यायमा छ । २६ ।



नं. २७ महासत्व राजकुमार जातक– जन्म स्थान नेपाल पांचाल देश (पनौति) माता सत्य देवी, पिता महारथ राजा, जाति क्षत्रि ।

दाजु महाप्रसाद, भाई महादेव, अविवाहले गर्दा स्त्री छैन । महासत्व राजकुमार आफ्ना दुई दाजु भाईका साथ पांचाल देश बाट केहि कोश पर वन क्रीडा गर्न गएका थिए । वनमा घुम्दा घुम्दै महासत्व राजकुमारले सुत्केरी भएका तर खान नपाएको भोकले असक्त अवस्थामा आफैले भरखर जन्माएका बाल बच्चालाई मारी खान तयारी भएको देखि महासत्व राजकुमारलाई दया उथ्यो । उनले आफ्नो शरीरको मासु रगत् खुवाए– ती बाल बच्चाहरूको प्राण रहोस् भन्ने करूणाले सूतेका व्याघ्री-लाई स्वशरीर अर्पण गरि मासु रगत् दान दिए । ज्यादै नै जीउदो मानिसको तातो रगत् र मासु खान पाएकाले बघिनी र डमरूहरूको प्राण बच्यो । तर राजकुमार शिथिल हुँदै गए । अन्तमा आफ्नो संपूर्ण शरीर बघिनी (व्याघ्रिनी) लाई अर्पण गरी प्राण त्याग गरे । पछि दाजु भाई र अन्य परिवारले महासत्व कुमारको खोज गर्दै जाँदा उनको कंकाल शरीर फेला पारे ।

शोक संतप्त परिवारले महासत्वको महान् दया र करूणालाई राख्न उनको अष्ठि पुंजलाई गर्भमा राखि उनको स्मृतिमा एक स्वयंभू चैत्य भगवान बुद्धको मूर्ति बनाए । यो चैत्य स्तूप, नमो बुद्धाय, नमराको नामले अद्यापि बिद्यमान छ । यो कुरा राम्रोसंग बुझ्नु इच्छा भए हेर्नु होस् सुवर्ण प्रभास सूत्र १९ अध्यायमा ।२७।



नं. २८ सिंहल सार्थवाह जातक– जन्म स्थान, सिंह कल्प नगर (नेपाल कान्तिपुर) ठमेल टोल माता केशिनीवती, पिता सिंहसार्थ पति, महाजन, साहु जाति श्रेष्ठ । अविवाहित छंदै युवावस्थामा २०० बेपारीहरूलाई लिई सिंहल द्वीप र ताम्र द्वीप (ह्लासा संदेश) मा व्यापार गर्न गए । त्यहां तिनीहरू राक्षसी-

हरूको हातमा परे । केहि समय पछि बेपारीहरूलाई ती राक्षसीहरूले मारेर खाने योजना बनाए । यस योजना कुनै बेपारीलाई थाहा भए । भाग्यवस एक रात सिंहल सार्थवाहले बालि रहेको बत्तिमा श्री करूणामयले दर्शन दिई राक्षसीहरूका योजनालाई प्रकाश पार्दै त्यसबाट बचन अनेक अति बुद्धि दिनु भयो । सिंहल सार्थ वाह विहान सबेरै उठी सबै साथीहरूलाई भईरहेको घटनाका ज्ञान दिलाए ।

सबै बेपारीहरू त्यहाँबाट मुक्त भई स्वदेश फर्कने संमत गरे । बाटामा ब्रह्मपुत्र नदी पर्दथ्यो । श्री करूणामय अबलोकितेश्वर तिनीहरूलाई बचाउन निमित्त श्याम कर्ण घोडाको रूप लिई रहनु भएको थियो । सिंहल सार्थ वाह श्याम कर्ण घोडामा चढी अरू साथिहरूलाई पनि घोडामा चढाई स्वदेश फर्केको बेला जस जस्ले पछि फर्कि रहेको बेला जस जस्ले पछि फर्केर हेरे उनीहरू सबै राक्षसीहरूको मुखमा परे । बल्ल बल्ल ज्यान जोगाई सिंहल सार्थवाह एक जना घर फर्के । राक्षसीहरू नेपालमा भित्र पसी राजदरबारका मानीसहरू एक दुई गर्दै सिध्याउन थाले । सिंहल सार्थ वाहलाई असह्य भयो । उनी दरवारमा गई करूणामयले वरदान दिएको षड्क्षरि महामंत्रको प्रभाव द्वारा चन्द्र हास खड्ग चलाई दिए । खड्गबाट निस्केका अग्नि ज्वाला सहन नसकी सबै राक्षसनीहरू भागा भाग भए ।

पछि सिंहल सार्थ वाह स्वयं राजा भई गुणधरो देवी कन्या संग विवाह गर्दै जनताहरूलाई गुण धर्मको व्याख्यान बाट प्रभावित तुल्याई सुख शान्ति तुल्याएर देशमा मंगलमय कामना सफल भए । यो कुरा गुणकारण्ड व्यूह सूत्र १५ अध्यायमा छ । २८ ।

नं. २९ श्येननृप जातक, जन्म स्थान अरिष्ट देश, माता पुष्पावती, पिता जयश्येन, पत्नी जय प्रभावती, जाति क्षत्रि । श्येन नृप राजकाल चलाए पछि तप-चर्या गर्नकोलाई तपोवन तिर लागे । उनले तपस्या गर्दै थिए । एकदिन मारगणका नेताले ब्रह्मण रूप लिई उनीसंग भएको चीज माग्दा दिन सत्य कराल गराए ।

राजा पनि आफुसंग भएको वस्तु दिनमा राजी भए । रूप धारी ब्राह्मणले उनको शिर देखी पैताला सम्मको अर्ध शरीर दान मागे । सत्यवादी श्येन नृप कति पनि नडराई हर्ष पूर्वक आफुले दिन्छु भनेको दान दिन राजी भए । उनी त्यस छलि ब्राह्मणको समक्ष लंपसार परी उनको आधा शरीर दिएर लैजानु पनि अनुज्ञा दिए । दुष्ट ब्राह्मणले उनको आधा शरीर माथि देखि तल सम्म चिरी श्येन नृपको हातबाट दान दिए । यस किसिम श्येन नृपले शरीरको अर्ध भाग दान दिई सत्य बचन जोगाए । यो कुरा व्रतावदान ५ र कल्पलटा अध्याय २ मा छ । २९ ।



नं. ३० विश्वन्तर राजकुमार जातक– जन्म स्थान विदर्भ देश, माता सुरूची रानी, पिता शिवि राजा, पत्नी मन्दिरा देवी, पुत्र जालि कुमार, पुत्री कृस्नाजिनी । विश्वन्तर साह्रै दानी राजकुमार थिए । उनले राज्यमा अति दान गरेकोले जनताले सहन सकेनन् । दुनियाको इच्छानुसार राजाले आफ्ना एक पुत्र राजकुमारलाई बनबास जान आज्ञा दिए । पिताको आज्ञा शिरोपार गरि स्त्री मन्दिरा देबी, पुत्र-पुत्री सहित तपोबनतिर लागे, त्यसबेलामा उनले चढेका रथ, हात्ति घोडा समेत् याचक ब्राह्मणहरूलाई दान दिएर गए । यसरी आफुसग भएको सर्बस्व दान गरी वंक नाम पर्बटमा आनन्द पूर्वक तपश्चर्य गरि वसे ।

यसरी दान कार्य सर्वत्र प्रचार भएको थियो । यसैले भेश धारी मार ब्राह्मण आई पुत्र जालि कुमार– पुत्री कृष्णाजिनी, दान मागे, विश्वन्तरले हर्ष पूर्वक प्रिय पुत्र पुत्री दान दिए । केहि समय पछि पति ब्रता पत्नी मन्दिरा देवी पनि दान माग्न आए । दानपारमिता पूर्ण गर्नका निमित्त प्रसन्न मन गरि अपनी स्त्रीलाई समेत दान गरे । यो कुरा राम्रो बुझ्नलाई दिव्यावदान २ जातकावदान ९ अध्यायमा छ । ३० ।



नं. ३१ मणिचूड राजकुमार जातक– जन्म स्थान शाकेतु नगर, नेपाल सांको

देश, माता कान्तिमति, पिता ब्रह्मदत्त राजा, पत्नी पद्मावती देवी, जाति क्षत्रि। राजा वृह्मदत्तले इन्द्रजित निरर्गड यज्ञ गरी महिनाभरी दान कार्य गरि भोजन प्रदान गरी रहे। एक महिना पछि काममारले पठाईएको इन्द्र राक्षसको रूपमा यज्ञमण्डपबाट बाहिर निस्की रोसले खुट्टा बजाउँदै यज्ञमण्डपको चारतरफ घुम्दै हात मल्दै ठुलो स्वरले कराउन थाले। मलाई दान देउ। भोजन देउ। म एक राक्षस हूं। देव मनुष्यको आहार तथा स्वात्विक भोजन दहि दूत् रोति फलमूल पंचामृत क्षीर आदि मेरो निमित्त योग्य हुने छैन। वन जन्तुहरूले वनका पशुहरू मारेर खान्छन्। पंछीहरूले कीटाणु (किरा) हरू खान्छन्। गृद्ध चील काक आदि कुपंछी-हरूले मृतक प्राणिका दुर्गन्ध मासु खान्छन्। कुपशु सुंगुर आदिले मल खान्छन्। किरा परेको दुर्गन्ध (गन्हाएको) आहार भूत प्रेतहरूले रूचाउँछन्। दैत्यले नगन्हाएको कांचो वा पाकेको मासु खाई धेरै सुरापान गरी, खड्ग खुकुरी बञ्चरो आदि शस्त्रास्त्र चलाई मारकाट गरी हिड्छन्। राक्षस जातिहरूले सधैं सद्य-मासु रगत् अर्थात् रूधिराहार भरखर मारेको तातो रगत् मासु खान्छौं। त्यस्तै भयंकर वन जन्तुहरूले पनि तातो रगत् प्राणिको मासु खान्छन्। तर म राक्षसले पशु पंछि मृतक व्यक्ति, ज्यानमारा कैदी आदिको मासु खान्दिन। यदि मलाई खुसि तुल्याउने र सन्तोष आहार दिने हो भने ऐले मलाई तुरन्त जिउँदो मानिसको तातो रगत् मासु देउ। नत्र त्यसै जानेछु। रूपधारी राक्षसको यस्तो आक्रोश हूंकार ललकार शब्द कुवाक्य सुनी, त्यहाँ भएका जनता सबै दरले थर थरायमान काम्न थाले। राजकुमार मणिचूडले धीरता पूर्बक त्यसको कुरा बुझी अन्तमा आफ्नो शरीर त्याग्न परे पनि उस्को ईच्छा पुराई दिने विचारले त्यस स्थानमा स्वशरीरको नसा काटी जिउँदो रगत् चुसाए। शस्त्रले ठाउँ ठाउँको मासु काटी खवाए। मणिचूड-को त्यस सहिष्णुता महान् पूर्णदान देखी भेशधारी राक्षसको मनमा करूणा उत्पन्न भयो। ऊ राजकुमार देखि सार्है खुसी भयो र राक्षसको रूप त्यागी इन्द्रको रूपमा प्रकट भए।

निःस्वार्थी मणिचूड संग अनेक उपदेश वार्तालाप गरीसके पछि– उनको घाउमा दिब्य औषधी लगाई दिए। इन्द्र आफ्नो भुवनमा फर्के।

यज्ञ समाप्त भयो राजा रानी सबै आश्चर्य भए। राजकुमार मणिचूडको शरीरमा घाउ पनि क्रमशः निको हुँद गयो। उनी स्वास्थ्य ठिक भएपछि केहि समयमा विदा लिई गृह त्याग गरि तपस्या गर्न निमित्त तपोवनतिर लागे। जंगलमा गइ ६ वर्ष सम्म तपोब्रत पालन गरे। त्यस तपोवन स्थानमा पनि पाँचजना मार सैन्यहरू ब्राम्रण रूप लिई तपस्वी मणिचूड कहाँ गएर यसरी विन्ति गरे, हे महान् दाना मणिचूड ! हजुरको मित्र दुष्प्रसह राजाको राज्यमा देशभरी ठूलो महामारी रोग फैलिएर धेरै प्रजाहरूको विनाश भई रहेको छ। यस महामारो रोगको विघ्नोपद्रव शान्त गर्नु निमित्त तपाईको योगदान चाहिएको छ। हजुरको शिर भित्र मस्तिष्कमा रहेको मणिरत्न झिकी, पानीमा राखी ती पानी महामारी भएको देशभरी छर्की-दियो भने ती देशका जनताको रोग दुःख पीडा तुरन्त शमन भई सुखी हुन्छन् भन्ने विद्वाँन्हरूको भनाई छन्। यसकारण प्राणिहरूको प्राण रक्षार्थ हजुरको मणिरत्न दान माग्न हामीलाई यहाँ पठाईएको हुन्। अतएव– हजुरको मणिरत्न (शिरोमणि) दान दिनु भए प्राणिहरूको जीवन दान दिनु हो– यथाशीघ्र मणिरत्न दान दिनु होस्। ब्राह्मणहरूका यो कुरा सुनी तपस्वी मणिचूडको चित्त करूणाले भरियो। प्राणि हितार्थ आफ्नो जीवन दान दिने निश्चय गरे र ती अमूल्य शिरोमणि योग्य स्थानमा दान दिन ती ब्राह्मणहरूलाई लिएर गए।

केहि पर दुई पर्वटका माझमा वसी प्राणी कल्याणको निमित्त आफ्नो शिरोमणि समेत् त्याग गर्न तयार रही मणिचूड (वोधिसत्व) राजकुमार आफ्नो घुडा काखी च्यापी वसिसकेपछि ब्राह्मणहरूलाई अऱ्हाए। ब्राह्मण हो, तिमीहरूले मेरो शिर करौटीले दुई टुक्रा पारी चिर्नु। मणिरत्न झिकी मेरो हातमा दिनु। मैले हर्षोत्सुकले तिमीहरूलाई दान दिई पठाउछु। तपस्वीले भने जस्तै ब्राह्मणहरूले शिर चिरी मणि झिकी मणिचूडको हातमा राखी दिए। मणिचूड वोधिसत्वले आफ्नै हातले

दान दिए। पाँचै ब्राह्मण शिरोमणि लिएर दुष्प्रसह राजाको हातमा राखी दिए। राजाले मणिरत्नलाई पानिमा राखी ती पानि देशभरी छर्की दिए। चारदिन पछि नगरमा रोग शान्त भएर गयो। महामारी लोप भयो स्थानीय जनताले शान्ति पाउन थाले।

उता मणिचूड तपस्वी करौतिले शिर चिरूञ्जेल कष्ट सही परोपकारको निमित्त शिरोमणि दान गरी तत्काल प्राण त्यागेर गए। सांको देशवाट केही कोश पर मणिचूडले तपस्या गरेको ठाउँ जुन मणिचूड दँहको नामले प्रसिद्ध भएको अद्यापि छ। धारा पोखरी स्तूप चैत्य उक्त स्थानमा विद्यमान् छ। मणि दान गरेको ठाउँ मणिलिंगेश्वर तीर्थ प्रख्यात भएको स्थानमा वौद्ध मार्गीहरू तीर्थ वृत गर्न आज सम्म पनि जाने चलन छ। यो कुरा-म-जा-मा-५०–स्वायंभू पुराण–४–दिव्यावदान १८–कल्पलटा ३ अध्यायमा छ। ३१।

⁂

## नं. ३२ कलियुगमा जन्म–१

वोधिसत्व सर्वार्थसिद्ध राजकुमार जातक– जन्म स्थान लुम्बिनी वन, कुल शाक्य सूर्य वंशी, कपिलपुर। माता माया देवी, पिता शुद्धोदन राजा, पत्नी यशोधरा देवी, पुत्र राहुल कुमार, जाति क्षत्रि। द्वापर युगको अन्तिम- कलि युगका प्रथम चरणमा, पुण्य भूमी नेपालको पवित्र शुद्ध स्थान लुम्बिनी वनमा माया देवी सबारी हुंदा त्यस पवित्र स्थानमा पुगेपछि दाहिना हातले पाखरी बृक्ष समाती केही समयमा माया देवीका दाहिना कोखवाट वोधिसत्व राजकुमार जन्म भयो।

यो वालक ३२ लक्षण ८० व्यंजन सवै सुलक्षणले युक्त छ। देव मनुष्य दैत्यादिमा सर्व श्रेष्ठ, ज्ञान दीप स्वरूप, ज्योतिर्मय सुवर्ण वर्णले सुसम्पन्न थियो। उनको वाल सुलभ व्यक्तित्वमा विश्वभरी शान्ति र करूणाको ज्योति रूप ध्वजाका झलक झल्कि रहेको थियो। नवजात शिशुको यस्तो असाधारण व्यक्तित्व देखी देव मनुष्य दैत्यगण अत्यन्त प्रभावित भए।

जन्म हुनासाथ चारै दिशामा सात पाहिला टेकी पहिले पूर्व दिशातिर हेरी देव मनुष्यादि सबैको गंभीर ज्ञानोपदेश दिएर म गुरू हुनेछु इत्यादि भन्नु भए।

त्यसबेला लुम्बिनी वनमा पशु पंछीहरू सबैको मित्र भावले, वलियोले निर्वलोलाई मारी खाने प्रथा हराएर गयो। पहिले नभएको फल फुलहरू उत्पन्न भई अत्यन्त सुशोभित भएकोले स्वर्ग लोकका देवतादिले अनेक वाजा बजाई पुष्प बृष्टि गर्न थाले। सुगन्ध हावा चलि शीतल भए। व्रह्मादि इन्द्र देवता आई पीताम्बर वस्त्र चढाई प्रणाम गर्न आएका थिए।

वोधिसत्व जन्मेर ७ दिनमा माया देवी (माता) स्वर्गलोक त्रार्यत्रिशाभुवनमा गइन्।

त्यसपछि लुम्विनी वन (उद्यान) मा शुद्धोदन राजा सबारि भई वोधिसत्वलाई रथमा राखि कपिलपुर स्वभवनमा लगेर दान प्रदान दीपावली महोत्सब गरि ३२ जना असल धातृवर्ग स्त्रीहरू द्वारा क्रमशः वोधिसत्व वालकलाई पालन पोषन गर्नु भए।

शुद्ध बेलामा सर्वार्थसिद्ध नाम करण राखि– पंचम मासको सुदिनमा कुल देवता दर्शनार्चन गर्न जांदा सबै कुल देवताहरू भरेङमा वसी, वोधिसत्व वालकलाई प्रणाम गरि स्तोत्र गरेको सुनि हेरि शुद्धोदन राजा प्रभीति त्यहाँ आएका सबै हर्षोत्सुक भई फर्केर दरवारमा वसी वालकलाई अन्न प्रासन विधि क्षत्रि जाति शाक्य कुलको रीतले, क्षीर भोजन ख्वाउनु भयो।

तत्पश्चात ५ वर्षको उमेरमा लिपि शालामा लगि ( ५०० ) विद्यार्थी शाक्य कुमारहरूको माझमा राखि वोधिसत्वलाई अध्ययन गराउँदा– कसैले थाहा नभएको नजानेको, अकारादि ककारादि बर्ण सबैको विशुद्धि समेत् आफैले वताई घोषणा गरि सुनाएको बुझ्दा त्यस स्थानको प्रधानाध्यापक विश्वामित्राचार्य गुरूले वालक वोधिसत्वलाई त्रिप्रदक्षिणा गरि स्तोत्र सहित प्रणाम गरे।

१६ वर्ष पुगेपछि वाहिर सबारि भई जम्बू बृक्ष मुनि वसि ध्यान गरि विचार

गरे पछि, केहि दिनमा घोडा चढि बाहिर सवारि हूँदा– पूर्व दक्षिण पश्चिम उत्तर दिशामा– क्रमशः बृद्ध रोगी मृतक भिक्षु देखि– केहि थाहा नभएको जस्तो गरि छन्दक साथिसंग कुरा गरि दरवारमा जानु भए ।

२० वर्ष पुगेपछि देव मनुष्य दैत्यादिले गर्न नसकेको ऋद्धि देखाई दण्ड पाणि शाक्य राजाको सुपुत्री गोपा स्त्री (यशोधरा) देवी स्वयम्बर सहित विवाह गरि गृहस्थि कुल धर्म देखाए । गृहवासी (गृहस्थ जीवन) सुधार गर्न निमित्त मैत्री भावनाको शान्ति सुरक्षा वोधिज्ञान अववोध गराई वौद्ध न्याय दर्शन पुस्तक लेखि पुस्तकालयमा स्थापना गरि परोपकार गरे ।

केहि समय २९ वर्षको उमेरमा राज्यैश्वर्य गृह त्याग गरि लोकोत्तर धर्म अन्वेषणको लागी तपोवनतिर लागे । दिन रात गमन गर्दै ३० योजन मार्ग भ्रमण गरेपछि अनोमा तीर्थ वनमा स्वयं चैत्य बुद्ध स्तूप एक बनाई वहाँले प्रवज्या चूडाकर्म बुद्धचर्य आफैले सिध्याई अन्यत्र स्थानमा भ्रमण गरे ।

वहाँलाई शुद्धावासिका देवपुत्रले चीवर वस्त्र दान गरि वहाँको केश लगि स्वर्ग-लोकमा गर्भ राखि परिभोगिक नाम बुद्ध मूर्ति (स्तूप चैत्य) बनाई नित्य पूजा गरि मान्यता गरे । त्यसपछि नैरंजना नदीको तीरमा ६ वर्षसम्म देव मनुष्य दैत्यादि कसैले गर्न नसक्ने दुष्करचर्य आस्फाण योग द्वारा तपचर्य गर्नु भए । कष्टदायी तपचर्यले शरीर क्षीण भए तापनि गंभीर पूर्वक आफ्नो चित्त दृढ गरि लोकोत्तर ज्ञान वोध गरेको बेलामा मार आई किन कष्ट गरेको उठेर घरमा सुःख भोग गर्न जाउ एवं अनेकानेक संसारको रचनात्मक देखाई सुनाए । तथापि आफ्नो कार्य सफल गर्नका निमित्त मारको वचन केहि वास्ता नगरि वसे ।

निराहार तपचर्यले गर्दा शरीर ज्यादै क्षीणता र दुर्वल भएको हुनाले, बुद्धिमानी ब्राह्मणी एक सुजाता कंन्याले दान दिएको शुद्ध क्षीर भोजन गरि विचार गरे ।

वोधिज्ञान प्राप्त हुनुको निमित्त त्यस ठाउँवाट उठेर वोधि मण्डपमा गई वोधि-बृक्ष (पिपल) बृक्षका मूलमा वज्रासनले मार पराजय नाम समाधि योग गरि--

मारगणहरूलाई पराजित भई सकेपछि तीर्थिकादि आत्म ज्ञानहरूलाई समेत् विजय गरि अनात्म ज्ञान संम्यक संबुद्ध भगवान् तथागत भई वोधिज्ञान प्राप्त गर्नु भयो ।

भगवान् बुद्ध सर्व प्रथम पंच भद्र वर्गीय विद्वान् ब्राह्मणहरूलाई उपदेश दिन वाराणसी ऋषि पट्टन मृगदावन पुग्नु भयो। उनीहरू पाँचजना भगवान् बुद्धको उत्तमोपदेश अनात्म ज्ञान, चतुरार्य सत्य, प्रतीत्य समुत्पाद, त्रिंशत्वोधिपाक्षिका, धर्म, प्रज्ञाशील समाधिमा प्रमाणितले दीक्षित भई अनेक असंख्य शिष्यहरू सहित पुनः विद्वाँन् ब्राह्मणादि शारिपुत्र महामौङ्गल्यायण आनन्द काश्यप सुभूति एवं अन्य वहु शिष्यहरूका साथ जेतवन मगध आदि बन विहार गर्दै, दाहिना र वाम तिरको वाटो संसारको प्रबृत्ति मार्ग छोडी, संसारदेखि निबृत्ति हुने मार्ग (माऊको वाटो) अपनाएर श्रावक, प्रत्येक वोधिसत्व, एवं महायान गृद्धकूट- वज्रयान वज्रकूट, तंत्र मंत्र सहजयान शिखर पर्वट श्रीपर्वट आदिमा विराजमान भई जगतो हिताय सुखाय लोकानुकंपाय, मैत्री-करूणा-मुदिता-उपेक्षा-स्वभावं शुद्ध हुने-- अहिंसा परमो धर्म-- को मूल शील धारण उपदेश पछि-- नेपाल पुण्य भूमी स्वयंभू दर्शनार्चन गोपुच्छ पर्वट स्थान सम्म पनि आउनु भई मैत्री वोधिसत्व र देव मनुष्य दैत्यादिहरू-लाई वोध गर्न निमित्त किन्दोल विहारमा विराजमान भई नेपाल तीर्थ महात्म्य सद्धर्मोपदेश उत्तम आर्याष्टांग सत्य मार्ग देखाई पुनः अमृतवाणी ४५ वर्षसम्म भ्रमण गरि बृष्टि गरे ।

पछि ८० वर्षमा कुशी नगरको शाल बृक्ष मुनि उत्तर शिधा नगरि जन्म जरा व्याधि मृत्यु भोग गर्नु नपर्ने महापरि निर्वाण प्राप्त गर्नु भयो ।

पुनः निर्वाणको अर्थ वोध गर्नु अतीत भगवान् बुद्धहरू असंख्य विराजमान भएको स्थान बुद्धालय सुखावती अकनिष्ठा भुवन-- मोक्षपुरमा विराजमान भई-- दशवल तव नित्यं सुप्रभात प्रभातं-- दशवल नाम भगवान् बुद्ध तपाईको सर्वदा-प्रातः काल मात्र भई रहने-- दिउसो रात कहिले पनि नहुने स्थान बुद्ध भूमीमा प्राप्त भएको जान्नु ।

यो कुरा राम्र वोध गर्नु इच्छा भए हेर्नु होस् नव सूत्र निर्वाण सूत्र पंच रक्षा करर्वीर इत्यादि ग्रन्थमा स्पष्ट रूपले देखाईएको छ ।

卐

नेपालमा बुद्ध जीवनी एक हजार (१०००) वोधिसत्व जातक पुस्तकहरूको नाम अद्यापि विद्यमान भएको वोध गर्नु ।

वाङमयमा ५४७ शतकावदानमा १००– जातक मालामा २०– महज्जातक मालामा ५०-- व्रतावदानमा १३-- कपिदावदान, महावस्तु अवदान, भद्र कल्पावदान, दिव्यावदान, द्वाविंशतिकावदान, रत्नमालावदान, यमद्वारानुशंसावदान, विचित्रकर्णिकावदान, चित्रविंशति अवदान, सुवर्ण प्रभास सूत्र, गुणकारण्ड व्यूह, स्वयंभू पुराण, कल्पलटा, ललितविस्तर इत्यादिमा २७०- यो सबै मिलाई जम्मा ( ७३० + २७० = १००० ) एक हजार।



भगवान् बुद्धको ३२ जातक मध्ये भद्रकल्पावदानमा २६ जातक पर्दछन् । द्वापर युगमा काशी देशमा जन्म हुने वीरकूश राजाको वंश वोध गर्नु ।

वसु वन्धु राजा-- उनको पुत्र उपोषध, उनको छोरो मान्धाता, उनको पत्नी-- सुचित्रा रानीका गर्भवाट जन्मनु भई उखुवाट उत्पन्न हुने इक्षाकूश राजा, उनको छोरो वीरकूश राजा हुन् ।

नोटः-- उपोषध राजाको शिरमा खटिरा निस्की दश महिना पछि खटिरा वाट निस्कने मान्धाता राजा हुन्, भनी लेखिएको पाईन्छ ।

ललित विस्तर सूत्र तृतीयोऽध्याये, शाक्य वंशको उत्पत्ति । ३२ जातक मध्ये कलि युगको प्रथम पादमा लुम्बिनी वनमा जन्मने सर्वार्थसिद्धको वंश र पुस्ता क्रमशः निम्न प्रकार छन् । नेपाल देखि पश्चिम दिशा शाकोट नामक अयोध्या शहरमा सूर्यवंशी महासंवत राजा, १. उनको पुत्र रोचाभिध, २. इनको छोरो राव, ३. रावका छोरो उपोषध, ४. उपोषधको छोरो मान्धाता, ५. मान्धाताको छोरो

नभएकोले छोरीका छोरो पश्चिमक भन्ने नातिलाई राज्य दिए, ६. पश्चिमकको छोरो सुजात राजा, ७. यिनको पुत्र ओपुर, ८. ओपुरको पुत्र सिंह हनु, ९. सिंह हनुको छोरो शुद्धोदन, १०. शुद्धोदनको छोरो सर्वार्थसिद्ध, ११. यिनको छोरो राहुल भद्र कुमार १२. राहुल भद्रको पुत्र २ छन्:- १) मंत्री २) सकलानन्द पछि द्वितीय पुत्र सकलानन्द राजा भई कपिलपुर नगरमा राज्यैश्वर्य चलारक गएको कुरा भद्र कल्पावदानमा लेखिएका छन्, जम्मा १३ पुस्ता शाक्य वंशको कुल हुन् ।

पुनः शाक्यवंश उत्पत्तिको कुरा--

नेपाल देखि पश्चिम दिशा शाकोट नामक अयोध्या सहरमा महासंमत क्षत्रि राजा पछि पुस्तानुक्रमले १) कल्याण २) राव ३) उपोषध ४) मान्धाता ५) मान्धाताको छोरी पट्टिको नाति पश्चिमक ६) उनको छोरो सुजात राजा भए ।

सुजात राजाका ज्येठी रानी कान्ति देवीको तरफवाट १) ओपुर २) निपुर ३) कर्कण्डक ४) उल्कामुख ५) हस्तिकर्षिक नामक पाँच छोराहरू र १] शुद्धा २] विमला ३] विजिता ४] जला ५] जली नाउँ गरेकी पाँच छोरीहरू थिइन् । साथै कान्छी जेन्ती रानी (मध्यापट्टि) वाट जेन्त कुमार नामक एक छोरो पनि थिए ।

एकदिन जेन्ती रानीले राजालाई काम रागमा मोहित पारी खुसी तुल्याइन् । अनि सौता कान्ति देवी सहित सबै राजकुमारहरूलाई बनबास पठाई तिनको छोरो जेन्त कुमारलाई राज्याभिष्येक दिलाउने बरदान मागिन् । स्त्री बसमा परेको सुजात राजाले तिनको इच्छानुसार रानी सहित सबै राजकुमारहरूलाई बनबास पठाई जेन्त कुमारलाई राज्य सुम्पने अनुमति दिए । पाँचै राजकुमारहरूले पिताको आज्ञा शिरोपर गरी माता कान्ति देबीलाई लिई सहर्ष पूर्वक उत्तर दिशातिर बनबास प्रस्थान गरे ।

ती सुकुमारहरूले बनमा पाउने फल स्कन्द मूल आहार गरी एक महिना बिताए

सकेपछि कपिलमुनिको आश्रममा पुगे। मुनीश्वरलाई प्रणाम गरी आफ्ना दुःख कष्ट यथार्थ बिन्ति गरे। केहि समय कपिलमुनिको सेवा सुश्रुषा गरि सकेपछि उनी खुसी भए। उनको सल्लाह अनुसार त्यहाँ सबै बनको शाकोटक बृक्षहरू काटी घर बनाई बस्ने ब्यवस्था गरे। क्रमशः त्यहाँ बस्ती बढ्दै गयो। पछि त्यो ठाउँ शाकोट नगरको नामले प्रशिद्ध भयो। पछि बिस्तारै बिस्तारै बाटो बनाई हात्ति घोडा रथको ब्यवस्था पनि राम्रो भयो। बस्न ठाउँ केन्द्र बगैचा दरबार तयारि भयो। त्यस नगरमा एक नायकको आवश्यकता पर्‍यो। मुनिको आज्ञा अनुसार राज्य स्थापना गरी सुजात राजाका ज्येष्ठ पुत्र ओपुरलाई राजा बनाई राज्याभिषेक दिए। त्यस नगरलाई कपिलमुनिको नामले कपिलपुर नगर भनि नामकरण गरे। राजा ओपुरले धर्म विवेक सत्य न्याय उद्योग विद्या शील शान्ति अहिंसा र श्रद्धा यी दश राज्यांग पालन गरी प्रजाहरूलाई पनि पालन गर्न लगाई– 'यथा राजा तथा प्रजा–' भन्ने उक्ती चरितार्थ गर्न उनी सफल भए।

महावस्तु अवदान र ललित विस्तर सूत्र अध्याय ४ मा निम्न श्लोक द्वारा शाक्य वंशको उत्पत्ति वर्णन गरिएको छ।

शाक बृक्ष प्रतिछन्नं वासं यास्मिन्प्रचक्रिरे।
तस्मा दिक्षांकु बंशास्ते भुविशाक्या इतिस्मृताः।

अर्थः– राम्रो सफा लामो हरियो पात सहित भएको ठूलो शाक बृक्ष (शाल रूख) लें घेरिएको बनको छेऊमा रहेको इक्षांकुवंशको प्रजागणहरू निवास स्थानलाई शाक्य देश शाक्य वंश भनिन्छ।

यता सुजात राजाको दरबारमा जेन्त कुमार सहित पाँचै दिदी बहिनीहरूको विवाह कार्य सिध्याएको खबर सुनी, उता ओपुर राजाले आफु सहित सबै दाजु भाईहरूको विवाह कर्म गरे।

केहि समय पछि ओपुर राजाको पुत्र जन्म भयो। उसको नाउं सिंहहनु राखियो। पछि सिंहहनु राजाको चार (४) छोरा छन्– शुद्धोदन, धौतोदन,

शुक्रोदन, अमृतोदन, र एक छोरी अमिता भए । यी राजकुमारहरू युबाबस्थामा पुगिसके पछि राजा सिंहहनु दुई देशका सुभूति (१) नामक शाक्य राजाका सात छोरीहरू क्रमशः माया देवी, गौतमी, शुद्धोदनलाई– अति माया, अनन्त माया, धोतोदनलाई, चुलिका देवी, कोकिला देवी, शुक्रोदनलाई– कान्छी प्रजापति देवी एक अमृतोदनलाई बिबाह गरी दिए । बुदेश कालमा ज्येष्ठ पुत्र शुद्धोदनलाई राज्याभिष्येक दिई राजा सिंहहनु तपोबनतिर लागे ।

केही समय बितेपछि शुद्धोदन राजाको कांछी बहिनी अमितालाई दुर्भाग्यबशः कुष्ट रोगले ग्रष्ट भयो । कत्ति औषधि गरे केही लागेन रोगले झन् झन् चाप्दै ल्यायो । दुर्गन्ध फैलियो आखिर केही नलागी खाने पिउने सबै ब्यबस्था मिलाई उत्तर दिशा स्थित हिमाल मुन्तिर एउटा गुफा बनाई तिनलाई राखे । राज पुत्री अमिताले तीन वर्षसम्म गुफाभित्र बसी समय बिताईन् । पछि हिमाली हावा चिसो जल र स्वच्छ वातावरणले तिनको कुष्ट रोग निको भई तिनी अधिक सुन्दरी भएर निस्किन् ।

त्यस अवस्थामा काशी देशका कोल राजा राजकाज छोडी तपस्या गर्न हिमालतिर लागेका थिए । एकदिन बन क्रीडा गर्न जाँदा सुन्दरी युवती अमितालाई देखी उनी मोहित भए । उनीहरूले आ-आफ्ना परिचय दिए । दुबै प्रेम पाशमा बाँधिए । दुबैले बिबाह गरी त्यही बनमा बस्न थाले । रहँदा बस्दा समय बित्दै गयो । अमिता गर्बबती भईन् । दश महिना पछि एक जोर (जमल्याहा) पुत्र जन्माईन् यसै गरी सोह्र पटक सम्म तिनले दुई दुई पुत्रजन्माईन् । ती ३२ राजकुमारलाई कोलर्षि राजपुत्रहरू भनि नामकरण गरे । ऋषि भेषधारी सुन्दर राज पुत्रहरू बनका फलफुल र स्कन्द मूल आहार गर्दै बढ्दै गए । पछि कोलराजर्षि राजा रानी (आमा बाबु) ले ती सबै राजकुमारहरूलाई कपिलपुर नगरका राजा शुद्धोदनका दरबारमा भिक्षा माग्न पठाए ।

राजा शुद्धोदन यी मुनि भेशधारी ३२ जना राजपुत्रहरूलाई देखी खुसी भए ।

पछि उनीहरूको यथार्थ हाल बुझेर हेर्दा आफ्ना बहिनी अमिताको पुत्रहरू भनी थाहा पाई उनको हर्षको सीमा रहेन। तिनीहरूलाई चाहिंदो स्वागत सत्कार गरी राज दरबारमा भित्राएर ऋषि भेश छोड्न लगाई कामका ब्यबस्था गरी दिए। समय भएपछि ती सबै कोलर्षि राजकुमारहरूलाई राज्य कुलका राज कन्याहरू बिबाह गरी दिए। उनीहरू आ-आफ्नो कुल चर्या र कुल धर्ममा रही घर ब्यबहारमा उद्योग ब्यबसायमा लागे। पछि उनीहरूको तरफबाट धेरै सन्तानहरू भए। यिनीहरू कोलिय शाक्य वंशको नामले प्रसिद्ध भयो।

काशी देशका यिनै कोल राजाका कुलकी कन्या पहिले ऊह नामक नगरका सुभूति नामक शाक्य राजाले बिबाह गरेका थिए। फेरी सुभूति राजाका सात राज पुत्रीहरू शुद्धोदन, धौतोदन, शुक्रोदन, अमृतोदन आदि चार दाजु भाईहरूले बिवाह गरे। ती मध्ये राजा शुद्धोदनका जेष्ठी महारानी माया देवीका गर्भबाट सर्वार्थसिद्ध (बोधिसत्व) ले बुद्धत्व प्राप्त गरि सकेपछि शाक्य देश र शाक्य कुलका सिंह समानको मुनि भएकोले वहाँ आज सम्म पनि शाक्य सिंह शाक्य मुनिको नामले विश्व प्रख्यात भयो।

शाक्यानां सिंह शाक्य सिंह। शाक्यानां मुनि शाक्य मुनि।
शाक्यानां वंश: शाक्य वंश। शाक्यानां गोत्र: शाक्य गोत्र:।
इति सिद्ध रूपम्।

**अर्थः– शाक्यहरूको सिंह–शाक्य सिंह। शाक्यहरूको मुनि–शाक्य मुनि। शाक्यहरूको वंश–शाक्यवंश। एवं प्रकारले जान्नु।**

### बुद्ध जन्म हुन आउनलाई चार कुरामा विचार–

कालं द्वीपं कुलं देशं चतुर्विधंब्य लोकयन्।
तथा काले कुले देशे जन्म संबोधि साधने।

**१) काल– जन्मनु, बृद्ध हुनु, रोगी हुनु, मृत्यु हुनु यी चार दुःखबाट मुक्त हुनु सक्ने नसक्ने समयको सबभन्दा पहिले बिचार गर्छ। पछि यसबाट मुक्त हुने रहेछ भने जन्म लिन आउने शुभ घडी राम्रोसंग जानेर काल बखत बिचार गर्छ।**

२) द्वीप– गाउँ गोरू साँढे आदिको मांस खाने मदिरा पिउने हिंसादि कर्म गर्ने, पूर्व विदेह– दक्षिण अपर गोडायनी– उत्तर कुरू-- यी तीन द्वीपलाई छोडी पश्चिम जम्बू द्वीपमा पूर्णिमाको दिन जन्म भई पूर्णिमाकै दिनमा बोधिज्ञान प्राप्त र निर्वाण प्राप्त गर्ने बुद्धको चर्या हुन् ।

३) कुल हिंसादि कुकर्म नगर्ने, मांस मदिराको प्रयोग पूजादिमा आफुले नगर्ने अरूलाई पनि गर्न नदिने कुललाई ठुलो कुल भनिन्छ । बोधिसत्व चण्डाल कुल हीन जाति ब्याधाबृत्ति–हिंसक माझी र बिष मदिरा शस्त्र आदि व्यापार गर्ने कुलमा जन्म लिएर तथागत हुन सक्दैन भन्ने पहिले विचार गरि सकेको हुन्छ । त्यसैले सर्वार्थसिद्ध बोधिसत्व हुन आउने तुषिताभुवनको गुरू श्वेतकेतु बोधिसत्वले शाक्य कुल रोजे ।

४) देश– हिंसक पापी रक्सोपान मांस भक्ष म्लेच्छ कुकर्म गर्नेहरू वास गरेको देश र अन्धा, लाटा, स्वाँठ, मुर्ख अहंकारी दुष्मन अविवेकीहरू बसेका ठाउँमा जन्म-लिई बुद्ध हुनु सक्दैन भन्ने-सबै देवताहरूले सुनीले गरो तुषिताभुवनमा पहिले नै श्वेत केतु बोधिसत्वले- काल-द्वीप-कुल-देश-विचार गरो यसरी घोषणा गर्न भएको थियो ।

पुनः घमण्डी ठग आफु नजान्न अपठित भएपनि जान्ने पठिक ज्ञानोपदेश दिने एवं सुन्ने सत्पु ज्ञानको कुरा प्रचार गर्नेलाई पनि तिरष्कार गरी गिल्ला गर्ने, ईर्ष्यालु आदिले बास गरेको डरमा बोधिसत्वले जन्म लिन्दैन । यसैले जन्मलिनु भन्दा पहिले बोधिसत्वले देश विचार गर्दछ ।

यसरी पहिले नै काल-द्वीप-कुल-देश-चार बिचार गरी पवित्र भूमी पश्चिम जम्बू-द्वीपको जनता धर्म अर्थ आचरण शुद्ध रूपले दान गर्ने स्वभाव शुद्ध भएको शाक्य कुलमा सर्वार्थसिद्ध बोधिसत्वको जन्म भई-- क्रमशः बोधिज्ञान बुद्धत्व पद प्राप्त गरी सकेपछि तथागत सम्यक संबुद्ध भगवान्-शास्ता-जगत् गुरू-मुनीन्द्र-सर्वज्ञ-शाक्य सिंह, शाक्यमुनि--अहिंसबादी–सत्यबादी–कर्मबादी–अनात्मबादी नामले बिश्वमा प्रख्यात भए । उनै ज्ञानका पुञ्ज परम भगवान् बुद्धले भन्नु भयो-- चरथंभिक्खवे

चारिकं बहुजन हिताय बहुजन सुखाय देबमनुष्यानां देसेय भिक्षवे धर्मआदौ कल्याणं, मध्ये कल्याणं, पर्य्योवसाने कल्याणं, सोर्धं सोव्यंजनं केवलं परिपुर्ण्यं परिशुद्धं पर्योवदानं ब्रह्मचर्यं संप्रकाशयन्तिस्म।

अर्थः-- धेरै जनलाई हित गर्नु, धेरै जनलाई सुख गर्नु लोक उपर ठुलोकपा गर्नुका निमित्त हित र सुख हुने, देव मनुष्यादिको जान्नु पर्छ हे भिक्षु! आचार्य्य गुरू कर्म गर्नु पर्नेले-- धर्म बुझ्नु-- पहिले कल्याण हुने- बर्तमान कल्याण हुने--पछि सम्म पनि कल्याण हुने- यो अर्थ व्यक्त रूपले बुझी केबल परिपूर्ण अत्यन्त शुद्ध चारैतिर कल्याणकारी ज्ञान दिएर ब्रह्मचर्य्य (बलियो चर्य्य) सर्वत्र प्रचार गर्नु भए बुद्ध बोधिसत्वहरूले। त्यस्तै गरि सर्वत्र स्थानमा भ्रमण गर्नु पर्छ। एवं प्रकारले सदुपदेश ४५ वर्षसम्म परिश्रम गरी ग्राम नगर जनपद आदि देशमा चारिका गर्दै प्राणीहरूलाई हित र कल्याणकारी कार्यमा जीवन व्यतित गर्नु भयो।

सद्धर्म पुण्डरीक-- भगवान् बुद्ध हुन्। जस्तै फोहर हिलो बाट उम्रेको कमल (फुल) उक्त फोहर हिलोले लिप्त भएन। त्यस्तै बुद्ध संसारमा जन्म भए तापनि राग, द्वेष, मोह, लोभ, काम, क्रोध, माया, तृष्णाहरू प्रपंचनादि हिलोले अलिप्त भईन्-स्वच्छ निर्मल पवित्र सुगन्ध कमल झैं स्वयं भगवान् बुद्ध पनि प्रतीक स्वरूप सद्धर्मपुण्डरीक भन्दछन्।

जापान बौद्ध बिद्वाँन् भिक्षुहरूले-- नाम्यो होरं गे क्यो-- सद्धर्म पुण्डरीक बुद्धलाई नमस्कार भनेर मंत्रोच्चारण गरी ढुलक बाजा बजाई भ्रमण गर्दैछन्।

भोगी--अर्थ विनिश्चये--

यस्मिन् भव दुःख राग द्वेषादि मोह त्यागम् समर्थ मज्ञानं च सो भोगीत्यर्थः।

अर्थ-- जुन मानिस संग संसारको दुःख जाल राग-द्वेष मोह-माया-तृष्णा-काम-क्रोध-लोभ-आदि-त्याग गर्न समर्थ र ज्ञान हुन्दैन त्यसलाई भोगी भनिन्छ।

योगी-- यो भोगी अविद्यलवोऽपि नैव विद्यते सयोगीत्यर्थः। अर्थ-- जस्मा भोगी र अविद्या रूपि ज्ञान, आकासमा उडिरहेको धुलोको कण प्रमाण पनि हुन्दैन त्यस्तो

व्यक्ति (बुद्ध) योगी हुन् ।

अविद्या-संमोहोऽविद्यान्धकार मिय मुच्यतेऽविद्येति ।

अर्थः- भवजालमा अल्झिने सांसारिक दुःख अविद्या हो। यसले गर्दा मोहादि आठँले छोप्न लगाई रस रग गर्नु अन्धकार अज्ञानलाई अविद्या भनिन्छ।

बुद्ध धर्मको मूल ग्रन्थ--

१) विनय पिटक, २) सूत्र पिटक, ३) अभिधर्म पिटक यी तीनै समूहलाई त्रिपिटक भनिन्छ। त्रिपिटकमा सवालाख ग्रन्थहरू छन्। तिब्बतका लामा गुरू र विद्वाँन्हरूले त्रिपिटकलाई कंकीर्ण टंकीर्ण भन्दछन्। यी ग्रन्थहरू पाटनको हिरण्य वर्ण विहार (क्वाथ बाहाल) मा तिब्बत द्वारा पठाएको आजसम्म विद्यमान् छन्। बृषदेव राजाको पालामा नेपालमा शंकराचार्य्य स्वामी आई बौद्ध गुरू पुरोहित गुभाजुहरूको अज्ञानता दर्शाउन बुद्ध धर्म नाश गरी नेपालमा भएको त्रिपिटक आदि ८४००० मूल मूल बौद्ध ग्रन्थ (बुद्ध शास्त्र) आगोमा राखी भस्म गरेर गए भनी बंशाबलीमा लेखेका छन्।

तैपनि सूत्र पिटकमा भित्रिएका प्राचीन (महायान दर्पण) नव सूत्र तात्कालीन विद्वाँन् आचार्य्यहरूले नागार्जुन पर्बटको गुफामा लुकाई राखेकोले नेपालमा यी ग्रन्थहरू अद्यापि प्राप्त छन्।

दूर देशका बिद्वाँन्हरू उक्त नवसूत्र निम्न प्रकारका छन्।

१] प्रज्ञापारमिता सूत्र-- प्रज्ञाशील समाधि सून्यता ज्ञानको विषय,

२] गण्ड व्यूह सूत्र-- समन्तभद्र भगवान् बुद्ध-भद्रचरिको कुरा,

३] दशभूमीश्वर सूत्र-- बोधिसत्वहरूको दशभूमी बिषयमा धेरै कुरा,

४] समाधि राज सूत्र-- दृष्टान्त बौद्ध दर्शनको मुख्य कुरा,

५] लंकावतार सूत्र-- लंकाधिपति रावणलाई वोध गरेको ज्ञान र सिंहा-मदिरा मांस निशेध गर्नु पर्ने ज्ञान,

६] सद्धर्म पुण्डरीक सूत्र-- श्रावक प्रत्येक महायान र बुद्धयानको कुरा,

७] तथागत गुह्यक सूत्र (गुह्य समाज तंत्र) बज्रयान, तंत्रयान, सहजयान आदि सबैमा अहिंसा धर्मवाट- मदिरापान मांसाहार निशेध गरे मात्र बुद्ध धर्म उज्वल हुन्छ भन्ने बिषयको कुरा,

८] ललित बिस्तर सूत्र-- भगवान् बुद्ध शाक्यमुनिको जातक पूर्ण रूपले बोध हुने कुरा,

९] सुवर्ण प्रभास सूत्र-- सून्यता ज्ञान र महासत्व त्यागो बोधिसत्वको मुख्य कुरा-- यो नवसूत्र ग्रन्थ भगवान् बुद्ध र बुद्ध बोधिसत्वहरूको बोधि ज्ञान यथार्थ बोध हुने हुन् ।

नेपालमा बर्तमान यो नवसूत्र ग्रन्थलाई पूजा र पाठ मात्र आदर छन् । उक्त ग्रन्थको ज्ञान ध्यान स्वयं नबुझेको हुनाले ब्याख्या गरी शिष्य यजमान उपाशक उपाशिकाहरूलाई बुद्ध धर्म यथार्थ उपदेश गर्नु बौद्ध गुरुहरूको धेरै नै कठिन भए ।

अत:-- शिष्य यजमान उपाशक उपाशिकादरूको पनि नव सूत्रको बुद्ध धर्म यथार्थ नबुझी ध्यान र ज्ञानको चर्य धेरैनै फरक भए ।

अशोकाऽवदान १ अ-- श्लो. ३०६--७

पांशु: पात्रे प्रदत्तं मे त त्वमानन्द पश्यति ।
एत त्पुण्य विपाकेन मम निर्वाण गच्छत: ।
पश्चात् वर्षशते याते दारकोऽयं पुनर्भवे ।
नगरे पाटली पुत्रे चक्रवर्ति नराधिप: ।
अशोको नाम भूमीन्द्रो नृपराजो भविष्यति ।

एकदिन भगवान् बुद्ध शिष्यवर्ग सहित उरूमुण्ड पर्वटमा भ्रमण गरि आउनु भएको बखतमा सहरका बीच बाटोमा दुई बालक खेलो रहेको देखि भगवान् बुद्ध त्यहाँ जानु भए । एक बालकले श्रद्धा उत्पन्न गरि भगवान् बुद्धको पात्रमा खेलो रहेको धुलो दान दिए । अरूले पनि सोहि धुलो दान दिए । त्यस बखतमा आनन्द भिक्षुले र अरूले पनि देखे । त्यस समयमा भगवान् बुद्धले आज्ञा गर्नु भयो । भिक्षु-

हरू ! तिमोहरूले सुन-- यो धुलो श्रद्धा हो मलाई पात्रमा धुलो दान दिएको पुण्यानुभावले, मेरो निर्वाण एकसय (१००) वर्ष पछि यो एक बालक पटना देशमा जन्म भएर अशोक नाम राजा भइ चक्रवर्ति अबश्य हुनेछ। पछि धुलो दान दिने बालक पनि त्यो राजाको मुख्य गुरू उपगुप्त नामक भई गृहाश्रम त्याग गरि-- भगवान् बुद्धको शिष्य आनन्द भिक्षु हुन भनेर सबैले थाहा भएकै हुन्छ। हे आनन्द ! तिम्रो शिष्य शाणवासी भिक्षु हो-- त्यहिं साणवासी भिक्षुको पनि, शिष्य उपगुप्त भिक्षु महान् परम बौद्ध गुरू भएर अशोक राजाको मुख्य गुरू हुन्छ ।

एवं प्रकारले आशीर्वाद दिई उपदेश सुनाएर क्रमशः आफ्नु स्व बिहारमा जानु भए ।

उपगुप्त र अशोक राजाको वंश-- अशोकावदान २।३ अध्यायमा मथुरा सहरमा जन्म-- श्रेष्ठ जाति गान्धिक गुप्त महाजनको प्रथम पुत्र अश्वगुप्त, द्वितीय पुत्र धनगुप्त, तृतीय पुत्र उपगुप्त ।

अशोक राजाको वंश--

जन्म बैशाली नगर-- क्षत्रि जाति बिंबिसार राजा १] त्यसको पुत्र- अजातशत्रु राजा २] त्यसको पुत्र उदासी राजा त्यो पटना सहरमा बस्न आए ३] त्यसको पुत्र मुण्डाभिध राजा ४] तिनको पुत्र काकवर्णि राजा ५] तिनको पुत्र सहसी राजा ६] तिनको पुत्र रकुचि राजा ७] तिनको पुत्र महामण्डल राजा ८] तिनको पुत्र प्रशेनजित राजा ९] तिनको पुत्र नन्द राजा १०] तिनको पुत्र बिन्दुसार राजा ११] तिनको पुत्र ब्राह्मणीका गर्भबाट जन्म अशोक राजा चक्रवर्ति समेत् भए १२] ति अशोक नृप पुत्र-- कुणाल कुमार हुन् १३] राज्यांग सबै त्याग गरि-- उपगुप्त महागुरू द्वारा- बुद्ध धर्ममा दीक्षित भई- अर्हत् परम पुज्य महीन्द्र महास्थविर नाम पद प्राप्त गरि (धर्म विवर्द्धन) थेरवादी (हीनयानी) को त्रिपिटकाचार्य बौद्ध महागुरू भएर केहि कालान्तरमा हंसराज जस्तै उडेर आकाश मार्ग वाट गई ब्रह्मा लंका आदि देशमा बुद्ध धर्म यथार्थ अध्ययन गराई प्रचार गरेर

संसार दुःखवाट मुक्त भएर गए ।

बैभाषिक तथा प्राचीन मत--बौद्ध दर्शनमा उल्लिखित--

महापण्डित चार जनाको मत बुझ्नु

१) श्रोतात्तिकानां देहेन्द्रियवादः– संसार सत्य निर्वाण असत्य ।

२) वैभाषिकानां विज्ञानवादः– संसार सत्य निर्वाण पनि सत्य ।

३) माध्यमिकानां क्षणिक विज्ञान वादः– संसार असत्य निर्वाण पनि असत्य ।

४) योगाचाराणां शून्यवादः– संसार असत्य निर्वाण सत्य ।

योगाचार शून्यवाद, अनात्मवादी महामानव भगवान् बुद्ध हुन् ।

१] भगवान् बुद्ध, बोधिसत्वको जन्म स्थान लुम्बिनी, २] बुद्धत्व बोधिज्ञान प्राप्ति स्थान बोधिमण्डप (वोधिगया), ३] धर्मचक्र प्रवर्तन स्थान सारनाथ, गृद्धकूट पर्बट आदि, ४] निर्वाण स्थान कुसीनगर ।

तीन रूखको नाम– ललित विस्तरमा

१) सिद्धार्थ बोधिसत्व जन्म समय लुम्बिनी बनमा माया देवीले दाहिना हातले समातेको रूखको नाम संस्कृत प्लक्ष बृक्ष नेपाल भाषा[नेवारि] पिला सिमा । नेपाली भाषा पाखरी रूख ।

२) सिद्धार्थ बोधिसत्व बोधिज्ञान बुद्धत्व प्राप्ति स्थान बोधिगयामा बस्नु भएको रूखको नाम संस्कृत अश्वत्थ बृक्ष-बोधिद्रुम-बोधि बृक्ष । नेपाल भाषा (नेवारि) वंगल सिमा । नेपाली भाषा पिपल रूख ।

३) सिद्धार्थ बोधिसत्व निर्वाण प्राप्ति स्थान कुसीनगरमा रूखको नाम संस्कृत बनस्पति बृक्ष, शाल बृक्ष, नेपाल भाषा (नेवारि) शाल सिमा, सिसो सिमा नेपाली भाषा, द्रुम रूख ।

नैरंजना नदी तीरमा बसी ६ वर्ष तप गरेर पनि नपुगि फेरी बोधिगयामा वज्रासनले बसी ध्यान द्वारा बोधिज्ञान बुद्धत्व प्राप्त गरे पछि सारनाथ विहारमा-- विद्वाँन् ब्रह्माणादि पंच भद्र वर्गीहरूलाई सर्व प्रथम धर्मचक्र प्रवर्तन

गंभीर अमृतोपदेश गरि सुनाउनु भएको,

चतुरार्य सत्य– ४ दुःख

| | | |
|---|---|---|
| यदियं परम दुःख | १ | जन्म हुनु दुःख–संसारमा खेल्ने । |
| दुःखं समुदय | २ | जरा दुःख–बृद्ध बृद्धी हुने, |
| दुःखं निरोध | ३ | ब्याधि दुःख–रोग हुने, |
| दुःखं निरोधगामिनी प्रतिपद् | ४ | मृत्यु दुःख–मरण हुने, |

पुनः मन खिन्नता प्रिय वियोग दुःख फेरो सनमा ताप र आफ्नु प्रेम संग वियोग हुने, अप्रिय संयोग दुःख आफ्नु अप्रिय संग संयोग हुने ।

–द्वादशांग (१२) प्रतीत्य समुत्पाद–

मूलः– अविद्या प्रत्ययात् १) सत्काराः २) संस्कार प्रत्ययात् विज्ञानं ३) विज्ञान प्रत्ययात् नाम रूपं ४) नाम रूप प्रत्ययात् षडायतनं ५) षडायतन प्रत्ययात् स्पर्शः ६) स्पर्श प्रत्ययात् वेदना ७) वेदना प्रत्ययात् तृष्णा ८) तृष्णा प्रत्ययात् उपादानं ९) उपादान प्रत्ययात् भव १०) भव प्रत्ययात् जाति ११) जाति प्रत्ययात् जरा मरण शोक परिदेव दुःख दौर्मनस्या महतो दुःख स्कन्धस्य समुदयो भवति ।

अर्थः– अविद्या १ प्रत्ययात् इत्यादि । अज्ञान मूर्ख बाल बुद्धि आत्मा ज्ञानले गर्दा ।

संस्कार २ अनित्यको कर्म बनाई भोग गर्नु पर्ने दुःख ।

विज्ञान ३ त्यस्ले गर्दा चित्तले ज्ञान अज्ञान अनेक मनमा तर्क वितर्क भएर आउने ।

नामरूप ४ नानाप्रकारको नाम र रूप देख्ने काम हुन्छ ।

षडायतन ५ त्यसपछि क्रमैले ६ प्रकारको इन्द्रिय खारा हुन्छ ।

स्पर्श ६ यी ६ इन्द्रियले स्पर्श गर्ने तातो चीसो खस्रो मसीनु अनुभव गर्ने हुन्छन् ।

वेदना ७ त्यसबाट पहिले भई सकेको कार्यहरूमा अनुभव गर्नु पर्ने अनेक दुःख ।

तृष्णा ८ जति भए पनि नपुग्ने प्यास हुन आउँछ।
उपादान ९ आफु मात्र कल्याण भए पुग्ने, परहरूको जेहोस्।
भव १० त्यसैले संसार उत्पत्ति हुन्छ, आफैले बनाउने हुन्छ।
जाति ११ त्यहिं संसारमा जन्मेर कर्म द्वारा आफै खेल्न आउँछ।

जरा मरण शोक परिदेव दुःख दौर्मनस्य उपायासा निरूध्यन्ते १२ बुढा बुढी भई अनेक सन्ताप र शोक गरि दुःखको ब्यवहार पाशमा परि नाना प्रकारको रोगले पीडित भएर मृत्यु हुने।

फेरी बुझ्नु-- जन्मेर बाचनुज्याल सम्म शोक सन्ताप बिलाप (रून्नु हास्नु) इत्यादिले मन खिन्न हुने कलह झगडा भई बिविध प्रकारको दुःख अनुभव गरी- आफुले गरेको कर्तु रूपि कर्म लिएर मृत्यु पछि- फेरि षट्गतिमा परि जन्म लिन आउने एवं रीतले कुंभकारको चक्रमा पर्ने झैं भोग गर्नु पर्ने दुःखलाई भव जाति (जन्म) मरणको जाल अर्थात् भवजाल भनिन्छ। एवं 'प्रकारं केवल ठुलो दुःखको समूह (जरा मूल) बाट अंकुर उत्पन्न भएर आउने सबै पहिले अविद्याबाट हुन्।

यी दुःख निरोध (भोग गर्नु नपर्ने) बुझ्नु

मूलः- अविद्या निरोधात्--संस्कार निरोधः। संस्कार निरोधात् विज्ञान निरोधः। विज्ञान निरोधात् नाम रूप निरोधः। नाम रूप निरोधात् षडायतन निरोधः। षडायतन निरोधात् स्पर्श निरोधः। स्पर्श निरोधात् वेदना निरोधः। वेदना निरोधात् तृष्णा निरोधः। तृष्णा निरोधात् उपादान निरोधः। उपादान निरोधात् भव निरोधः। भव निरोधात् जाति निरोधः। जाति निरोधात् जरा मरण शोक परिदेव दुःख दौर्मनस्य उपयासा निरूध्यन्ते।

अर्थः- अविद्या नभए संस्कार हुन्दैन। संस्कार नभए विज्ञान हुन्दैन। विज्ञान नभए नाम रूप हुन्दैन। नाम रूप नभए षडायतन हुन्दैन। षडायतन नभए स्पर्श हुन्दैन। स्पर्श नभए वेदना हुन्दैन। वेदना नभए तृष्णा हुन्दैन। तृष्णा नभए उपादान हुन्दैन। उपादान नभए भव हुन्दैन। भव नभए जाति हुन्दैन। जाति नभए

जरा मरण शोक दु:ख व्यवहार कलह सन्ताप आदि रून्नु केहि पनि हुन्दैन् ।

भावार्थः–

१) अविद्या निरोधात् इत्यादि । अज्ञान मूर्ख बाल बुद्धि आत्मा ज्ञान अहंकार ममता क्रोध अभिमान नभए ।

२) संस्कार– अनित्य कर्म बनाएर भोग गर्नु पर्दैन ।

३) विज्ञान– फेरी त्यहिं संस्कार नभएकोले अनेक तर्क वितर्क चित्तले हुने पनि हुन्दैन ।

४) नाम रूप– त्यो विज्ञान नभए नानाप्रकार देखने नाम रूप हुन्दैन ।

५) षडायतन– ती नाम रूप नभए ६ प्रकारको इन्द्रिय हुन्दैन ।

६) स्पर्श– ६ प्रकारको इन्द्रिय नभए स्पर्श ज्ञान पनि हुन्दैन ।

७) वेदना– त्यस्तो स्पर्श ज्ञान नभए अघिको अनुभव वेदना हुन्दैन ।

८) तृष्णा– त्यहिं बेदना नभए प्यास तृष्णा हुन्दैन ।

९) उपदान-- त्यस्तो तृष्णा नभए आफु मात्र कल्याण हुने लोभ उपादान हुन्दैन ।

१०) भव– त्यस्तो लोभ उपादान नभए भव (संसार) हुन्दैन ।

११) जाति– ती संसार (भव) नभए पछि जन्म हुन्दैन ।

१२) जरा मरण शोक परिदेव दु:ख दौर्मनस्य उपायासा निरूध्यन्ते । को भावार्थ यो हो-- जन्म हुन नपर्नेको बृद्ध बृद्धी रोग आदि शोक विलाप संताप अनेक तर्कना मन खिन्न हुने तर्क वितर्क कलह झगडा आदि आफुले गरेको कर्तु भन्ने कर्म लिएर फेरी जन्म हुन आउने र मृत्य हुने यस्तो प्रकारको भव-जालको दु:खमा केले पनि भोग गर्नु पर्दैन ।

यहीं हो मूल बुद्ध ज्ञान भव नाम संसार नभएको (जन्म लिन नपर्ने) कर्म क्षय भई सकेको हुनाले-- जन्म जराव्याधि मृत्यु बाट मुक्त भई सकेको हो निर्वाण पद प्राप्त गर्नु भएको विश्व प्रख्यात जगत् गुरू भगवान् बुद्ध तथागत हुन् ।

प्राणिहरूलाई यही सद्धर्म उत्तमोपदेश प्रतीत्य समुत्पाद द्वादशांग (१२) निर्वाण

ज्ञान प्राप्त हुने अनात्म ज्ञान विश्वमा प्रचार गर्नु भएको-- संसारका विद्वाँन् आचार्य-हरू सबैले विदित भई सकेका छन् ।

### पंच स्कन्ध बुझ्न प्रज्ञापारमिता आदिमा--

| | | |
|---|---|---|
| रूप स्कन्ध | १ | आँखाले देखने नानाप्रकारको रचना । |
| बेदना स्कन्ध | २ | गई सकेको र भई रहेको अनुभव सम्झने । |
| संज्ञा स्कन्ध | ३ | नभएको बस्तुलाई, भएको हो भन्ने अन्ध विश्वास गर्ने । |
| संस्कार स्कन्ध | ४ | अनित्य कर्म धमा धम बनाउने अज्ञान । |
| विज्ञान स्कन्ध | ५ | अनेक चित्तले तर्कना गरि तृष्णा गर्ने । |

### षडायतन बुझ्नु

| | | |
|---|---|---|
| चक्षु आयतन | १ | आँखाले देखने नानाप्रकारको रूप । |
| श्रोत आयतन | २ | कानले सुन्ने अनेक प्रकारको शब्द । |
| घ्राण आयतन | ३ | नाकले सुंघ्ने-सुगन्ध दुर्गन्ध आदि । |
| काय आयतन | ४ | शरीरले तातो चीसो खस्रो नरम आदि स्पर्श गरि बुझ्ने । |
| जिह्वा आयतन | ५ | जिभ्रोले षट्रसको स्वाद थाहा पाउने । |
| मन आयतन | ६ | चित्तले अनेक स्मरण गर्ने । |

### चतुर्ब्रह्म विहार

१] मैत्री-- सबै पर प्राणीहरूलाई मित्र भावना गर्नु ।

२] करूणा-- सबै प्राणी उपर दया माया राखी काम गर्नु ।

३] मुदिता-- सबैको भलो देखी खुसि हुनु ।

४] उपेक्षा-- सबै प्राणी उपर उपकार गरि काम गर्नु ।

### पंच काषाय बेदनामा पर्ने

| | | |
|---|---|---|
| क्लेशकषाय | १ | पाप मूल हिंसा कर्म ब्याधा बृत्तिमा लाग्ने । |
| दृष्टिकषाय | २ | परलाई अयोग्य नराम्रो दृष्टिले हेर्ने । |

सूत्रकषाय ३ परलाई सुःख नदिनुमा यत्न गर्ने ।
आयुकषाय ४ परलाई मात्र दुःख दिएर आयुर्दा छिन्न गर्ने ।
कल्पकषाय ५ परलाई पनि आफुलाई पनि दुःख हुने काम गर्ने ।

### बुद्धयान तथागतचर्य त्रियान बुझ्नु

| चर्यः | | त्रियान | गुरू | उपदेश |
|---|---|---|---|---|
| अर्हत् बुद्ध | १ | श्रावकयान | सत् गुरू | अहिंसा शिक्षा दिनु |
| संबुद्ध | २ | प्रत्येक बोधिसत्वयान | महागुरू | अहिंसा बाटो देखाउने |
| संम्यक संबुद्ध | ३ | महायान | परम गुरू | अहिंसा शिक्षा दिएर गमन गर्ने । |

### तथागतहरूको आहार २ प्रकार

१] धर्म प्रीत्याहार-- धर्मोपदेश मात्र दिएर सन्तोष हुने ।
२] ध्यान प्रीत्याहार-- ध्यान मात्र गरेर तृप्त हुने ।

### दश अकुशल कर्म दश कुशल कर्म ललित विस्तरमा

मूल— कायकं त्रिविधं पापं वाचिकंतु चतुर्विधं ।
मानसं त्रिप्रकारेण तत्सर्वं देशयाम्यहम् ।

अर्थः-- शरीरले ३ वाक् (मुखले) ४ मनले ३ जम्मा १० पाप सबै म देशना गर्दछु ।

| | अकुशल कर्म | | कुशल कर्म |
|---|---|---|---|
| कायकं | प्राणाति पाप | हिंसा गर्ने | प्राणि हिंसा नगर्ने |
| | अदत्तादान | चोरी काम गर्ने | चोरी काम नगर्ने |
| | व्यभिचार | परस्त्री संभोग गर्ने | परस्त्री संभोग नगर्ने |
| वाचिकं | मिथ्यावाद | झुठ्ठा कुरा गर्ने | झुठ्ठा कुरा नगर्ने |
| | संभिन्न | चुगली लगाउने | चुगली नगर्ने |
| | पैशून्य | कटु वचन गर्ने | कटु वचन नगर्ने |
| | पारूष्य | स्राप दिने | स्राप नदिने |

| | | | |
|---|---|---|---|
| मानसिकं | अविद्या | पर दुःख हेरी खुसि हुने | पर दुःख हेरी खुसि नहुने |
| | व्यापाद | पर सुख देखि दुःख हुने | पर सुख देखि दुःख नहुने |
| | मिथ्या दृष्टि | नास्तिक हुने | नास्तिक काम नगर्ने |

मूलः— दशा कुशल पापंच सदा तं परि वर्जयेत् ।
दश कुशल पुण्यंच सदा तं धारयेत् बुधैः ।

अर्थः– दश (१०) अकुशल कुकर्म (पाप) लाई सर्वदा त्याग गर्नु योग्य हुन्छ। दश (१०) कुशल कर्म (पुण्य) लाई सर्वदा धारण गर्नु योग्य हुन्छ भनेर विद्वाँन् आचार्यहरूले भनेका छन् ।

**सप्त त्रिशत् (३७) बोधिपाक्षिका धर्म बुझ्नु**

**नव सूत्र, अर्थ विनिश्चय, बृ. स्वयंभूपुराण ४ अध्याय**

**पुनः तथागत गुह्यके**

मूलः— सप्तत्रिशतिभिर्युक्तान् सर्वज्ञै रिति भाषितान् ।
चत्वारि मृत्यु पस्थानं चत्वारि संप्रहाणकम् । १ ।
चत्वारि ऋद्धिपाचदं पंचेन्द्रियं तथैवच ।
तथा पंचवलंचापि सप्त वोध्यंगक मपि । २ ।
अष्टांग माग मार्यञ्च एतान्सं वोधि पाक्षिकान् ।
ततो दिदेश भगवान् धर्मान्सं वोधि पाक्षिकान् । ३ ।

**अर्थः–**

(३७) वोधि पाक्षिका नाम धर्मले युक्त भएको पूर्व बुद्धहरूको उपदेश लोप हुनाले पुनः शाक्य मुनि बुद्धले उपदेश दिनु भए ।

**प्रथम स्मृत्युपस्थान ४**

१) कायानुमृत्युपस्थान– शरीर मृत्यु हुनु पर्ने हो वा होईन विचार गरी वरावर स्मरण गर्ने ।

२) वेदनानुमृत्युपस्थान– मृत्यु हुने र अरू अनुभव भई सकेको विचार गरि स्मरण गर्ने ।

३) धर्मानुमृत्युपस्थान– संसारमा मृत्यु हुनु पर्ने धर्म विचार गरि वस्नु ।

४) चित्तानुमृत्युपस्थान– चित्तले विचार गर्ने मृत्यु भनेको कसरी हुन्छ ।

## द्वितीय–संप्रहाणक ४

१) अनुत्पन्नानां कुशलानां समुत्पादनं– आफुसंग उत्पन्न नभएको धर्म (कुशल कर्म) उत्पन्न गर्ने ।

२) उत्पन्नानां कुशलानां संरक्षणं– उत्पन्न भई सकेको धर्म (कुशल कर्म) लाई राम्रोसंग रक्षा गर्ने ।

३) उत्पन्नानां अकुशलानां संप्रहाणम्– उत्पत्ति भएको पाप (अकुशल कर्म) लाई यत्न गरि नाश गर्ने ।

४) अनुत्पन्नानां अकुशलानां अनुत्पादनम्-- आफुसंग उत्पत्ति नभएको अकुशल (पाप) लाई यत्न गरि उत्पत्ति नगर्ने ।

## तृतीय–ऋद्धिपाद ४

१] छन्द ऋद्धिपाद– धर्म (कुशल कर्म) गर्नु मा धेरै उत्साह गर्ने ।

२] वीर्य ऋद्धिपाद-- धर्म (कुशल कर्म) गर्नु मा आलसी नगरीकन चित्तले उत्साह गर्ने ।

३] मीमांस ऋद्धिपाद-- धर्म (कुशल कर्म) को सिद्धान्त बुझी निश्चय गर्ने ।

४] चित्त ऋद्धिपाद-- धर्म (कुशल कर्म) गर्ने कार्यमा सर्वदा चित्त प्रवृत्ति गर्ने । प्रसन्न हुनु ।

## चतुर्थ-- पंच इन्द्रिय

१] समाधि इन्द्रिय– मन समाधान गरी इन्द्रिय आफ्नु वसमा राख्ने ।

२] श्रद्धा इन्द्रिय-- धर्म गर्ने बखतमा श्रद्धा अत्यन्त वलियो गर्ने ।

३] वीर्य इन्द्रिय-- धर्म गर्ने वखतमा दश इन्द्रिय वलियो गरि उत्साह गर्ने ।

४] स्मृति इन्द्रिय-- सुनेको धर्म नबिर्सिकन अरूलाई पनि सुनाउने ।

५] प्रज्ञा इन्द्रिय-- बुद्ध ज्ञान बुझेर सबै इन्द्रियलाई आफ्नु वसमा राख्ने ।

पंचम– पांचवल

१) श्रद्धावल– धर्म गर्ने बखतमा परोपकार हुने कार्य बलियो गर्ने ।

२) वीर्य वल– कुशल कर्ममा अत्यन्त पराक्रम बलियो गर्ने ।

३) स्मृतिवल– सुनेको धर्म राम्रोसंग बुझेर परलाई सुनाउनुमा बल गर्ने ।

४) समाधिवल– चित्त स्थिर गरी ध्यान द्वारा पूजादिमा बलियो गर्ने ।

५) प्रज्ञावल– बुद्धोपदेश प्रज्ञा ज्ञानमा चित्त बलियो गर्ने ।

षष्ठम–सप्तवोध्यंग ७

१) स्मृति संवोध्यंग– शास्त्र ज्ञान सुनेको वा अध्ययन गरेको सर्वदा संझेर राख्ने ।

२) धर्म प्रविचय संवोध्यंग– धर्म पत्ता लगाई बुझेर जम्मा गर्ने ।

३) वीर्य संवोध्यंग– धर्ममा अलासी नभई उत्साह गर्ने ।

४) प्रीति संवोध्यंग– धर्म कार्यमा सबैलाई अत्यन्त प्रेम गर्ने ।

५) प्रश्रब्धि संवोध्यंग– धर्म कार्यमा मन अत्यन्त आनन्द गर्ने ।

६) समाधि संवोध्यंग– चित्त स्थिर गरी ध्यान गर्ने ।

७) उयेक्षा संवोध्यंग– त्याग गरि सबै प्राणी समानता गर्ने ।

सप्तम-- आर्य अष्टांग (८) मार्ग

ज्ञानः–

संम्यक दृष्टि १ सबै प्राणीहरूलाई सुख हुने कार्यमा हेर्ने ।

संम्यक संकल्प २ प्राणी कल्याण हुने कार्यमा मात्र मन लगाई कल्पना गर्ने ।

शीलः--

संम्यक वाक् ३ अनर्थ वचन छोडै सत्य वचन मात्र वोल्ने ।

संम्यक कर्मान्ति ४ असल शुद्ध कर्म (कार्य) मात्र गर्ने ।

संम्यक आजीव ५ असल कर्म गरि जीवन गर्ने ।

समाधिः--

संम्यक व्यायाम ६ प्राणीको उपकार हुने उद्योगमा कोशिश गर्ने ।

संम्यक स्मृति ७ असल ज्ञान स्मरण गरि वस्ने ।

संम्यक समाधि ८ एक चित्तले योग ध्यान समाधि गर्ने ।

पंचाभिष्येक--धर्म संग्रहमा

१) दिव्यचक्षु १ विश्व सवै ठाउँमा आँखाले देख्ने ।

२) दिव्यश्रोत २ विश्व सबै ठाउँको शब्द बुझ्ने ।

३) परचित्त ज्ञान ३ पर सबै प्राणीका चित्तमा भएको कुरा बुझ्ने ।

४) पूर्व निवासानुस्मृति ४ आफ्नु र परको पनि पूर्व जन्मको कुरा बुझ्ने ।

५) ऋद्धि च ५ अनेक पराक्रम पनि हुने ।

षड भिज्ञ--

पाँच अभिज्ञ (पंचाभिज्ञ) मा यो थतेपछि-- षडभिज्ञ हुन्छ। वियङ्गमन काय-व्यूह सिद्धश्चेति । आकाशवाट जहाँ पनि जानु सक्ने ।

तथागतको दशवल बुझ्ने गण्ड व्यूहमा--

ऋद्धिवल १ अनेक प्रातिहार्य पराक्रमले युक्त भएको ।

यानवल २ श्रावक प्रत्येक महायान वज्रयान सबै भएको ।

चर्यवल ३ गर्नु पर्ने सबै सिध्याई सकेको ।

मैत्रीवल ४ करूणाको सागर समानले वल भएको ।

पुण्यवल ५ विश्वमा सबै पुण्यले पारंगत भई सकेको ।

ज्ञानवल ६ विश्वमा ज्ञान बुद्धिको परम गुरू भई सकेको ।

समाधिवल ७ योग ध्यान समाधि सबैले पूर्ण भई सकेको ।

वोधिवल ८ अहिंसा धर्ममा चक्रवर्ति समान भएको ।

कर्मवल ९ कर्म समाप्त गरि निर्वाण पद प्राप्त भएको ।

मार भंजनवल १० सबै मारहरूलाई जिती सकेको ।

बुद्ध बोधिसत्वहरूको दशपारमिता

दान पारमिता १ जसले जे मागे पनि दान गरि दानी भएको ।

शील पारमिता   २ चर्यानुसार हजार शीलले युक्त भएको ।
क्षान्ति पारमिता   ३ करूणाले सबै प्राणीहरूलाई नमारेको ।
वीर्य पारमिता   ४ देव मनुष्य दैत्यादिले गर्न नसकेको पराक्रम भएको ।
ध्यान पारमिता   ५ योग समाधि ध्यान सबै जानेको ।
प्रज्ञा पारमिता   ६ प्रज्ञा शील समाधिको आचरणले पूर्ण भएको ।
वल पारमिता   ७ सत्य धर्म प्रकाश गरि सबैलाई जितेको ।
उपाय पारमिता   ८ पर उपकार हुने ज्ञान बृष्टि गरेको ।
प्रणिधि पारमिता ९ सबै प्राणी मित्रता गरि वोधिज्ञान दान दिएको ।
ज्ञान पारमिता   १० संसार वन्धनवाट मुक्त भई सकेको ।

## षट् गति

देव गति   १ देबतादि स्वर्गको ऐस भोग गरी मर्ने ।
मनुष्य गति २ संसारको व्यवहारमा भुलेर मर्ने ।
दैत्य गति   ३ पातालमा वसेर काम क्रोधमा लुब्ध भएर मन ।
नरक गति   ४ पाप कर्म द्वारा नरकमा भोग गरि दुःख हुने ।
प्रेत गति   ५ भूत प्रेत राक्षस भएर अहंकारमा भोग गरी मर्ने ।
तीर्यक गति ६ कोटाणु दुर्गन्धमा वसिकन आहार निद्रा काम भोग मात्र गरेर मर्ने पशु र पंछीहरू ।

## प्राणीहरू चार (४) प्रकारले जन्म

अन्नजा   १ फूलवाट जन्म-- पंछी र कीटाणुहरू ।
जरायुजा   २ साल नाल (पि) वाट जन्म देव दैत्य मनुष्यादि पशुहरू ।
स्वेदजा   ३ दुर्गन्ध फोहर वाट जन्म किराहरू ।
ओपपादुका ४ फल फुल अन्न बृहि वाट जन्म– कोटाणुहरू ।

## उष्ण नरक ८ पापिहरूको भोग–

संजीव नरक १ सर्प बृक्षहरूले दुःख दिने वा टोक्ने ।
कालसूत्र नरक २ वलियो शिखर आदि डोरीले बाँधेर सास्ति गर्ने ।
संघाट नरक ३ शस्त्र प्रहार गरी सासना गर्ने ।
रौरव नरक ४ भयंकर वतास (हुरि) आउने ठाउँमा राख्ने ।
महारौरव नरक ५ धुलो वालुवा आदि उड्ने ठाउँमा राख्ने ।
तपन नरक ६ आगोका रापमा राख्ने ।
प्रतपन नरक ७ चारै ठाउँमा आगो राखि माझमा राख्ने ।
अवीचि नरक ८ तेल राखि पकाएको फलाम आदि भाडामा राख्ने ।

शीत नरक ९ पापीहरूको भोग–

अर्बुद नरक १ हिलो पंक दुर्गन्ध चीसो ठाउँमा राख्ने ।
निर्बुद नरक २ भयंकर सर्पहरू भएको पोखरीमा राख्ने ।
अटट नरक ३ यस्तै भएको नदीमा राख्ने ।
अटप नरक ४ हिलो अन्धकार ठाउँमा राख्ने ।
हाहा नरक ५ चीसो वतास आउने ठाउँमा राख्ने ।
उत्पल ६ ठुलो पोखरीमा राखि सासना गर्ने ।
पणु सौगन्धि नरक ७ गह्रौं फलाम गोल परेको पलाममा बाँधेर चीसो ठाउँमा राख्ने ।
पुण्डरीक नरक ८ हिउँ सिस्नु भएको ठाउँमा राख्ने ।
महापद्म नरक ९ जल हिउँ बृष्टि हुने ठाउँमा राख्ने ।

उप नरक ३

अतिसार नरक १ मल मूत्र रगत दुर्गन्ध युक्त पोखरीमा राख्ने ।
वन्धन नरक २ अन्धकार ठाउँमा राखि थुन्ने ।
असि पत्र नरक ३ तरवार जस्तो धार भएको (असि पत्र) रूख मुनि वतास पनि आउने वनमा राख्ने ।

जम्मा नरक २१ छन्। फेरी अरू बैतणी आदि नरक पनि छन् ।

पंचानन्तर्य (पंच महापाप)

मातृ द्रोही १ आमालाई घाटक गर्ने ।
पितृ द्रोही २ पिता (बाबु) लाई घाटक गर्ने ।
गुरू द्रोही ३ शिक्षा ज्ञान-- दिक्षादिने गुरूलाई घाटक गर्ने ।
देव द्रोही ४ देवतादिहरूलाई द्रोह गर्ने, देव मूर्ति विनास गर्ने ।
भिक्षु द्रोही ५ भिक्षुहरूलाई मार्ने ।

सप्त ७ पाताल

१) धरणी तल– २) अचन– ३) महाचन– ४) आप– ५) कांचन-- ६) संजोवन-- ७) अधो भुवन ।

उर्द्ध लोक स्वर्ग, चार दिशाको राजाहरू र भुवन ।

| | | | | |
|---|---|---|---|---|
| पूर्व | १ | धृतराष्ट्र | महाराज– | शुद्धावासिका भुवन । |
| दक्षिणे | २ | विरूधक | ” | त्रार्यत्रिंशा भुवन । |
| पश्चिमे | ३ | विरूपाक्षक | ” | यामा भुवन । |
| उत्तरे | ४ | वैश्रवर्ण | ” | निर्माण रतिभुवन । |

यो चार (४) भुवनको मालीक मुख्य राजा देवराज इन्द्र अमरावति स्वर्ग लोक (इन्द्रको निवास स्थान) वगोचा नन्दन वन ।

तो भन्दा माथि- वसवर्ति लोक- द्रुम भुवन- द्रुम राजा वस्ने ठाउँ भनिन्छ ।

त्यस देखि माथि तुषिता भुवन, मैत्री महावोधिसत्वको निबास, स्थान त्यसदेखि माथि अरू वोधिसत्वहरूको स्थान दश (१०) भूमीको नामावली यस प्रकार छन् ।

प्रमुदिता भुवन २) विमला ३) प्रभाकरी ४) अर्चिष्मति ५) सुदुर्जया ६) अभिमुखी ७) दुरंगमा ८) अचला ९) साधुमती १०) धर्म मेघा ।

त्यसदेखि माथि रूपावचरा ४ भुवन ब्रह्मादिको स्थान ।

१) ब्रह्म कायिका भुवन २) ब्रह्म पुरोहिता ३) ब्रह्म पार्श्वदा ४) महा-

ब्रह्मण । ब्रह्मा विष्णु महेश्वरादिको स्थान ।

त्यस देखि माथि १७ लोकेश्वरादिको निवास स्थान (भुवन) १] परिताभा भुवन २] अप्रमाणा भुवन ३] आभास्वरा भुवन ४] परितशुभा भुवन ५] शुभ कृत्स्ना भुवन ६] अनभ्रका भुवन ७] पुण्य प्रसभा भुवन ८] बृहत्फला भुबन ९] असंगिसत्वा भुवन १०] अबृहा भुवन ११] अतपा भुवन १२] सुदृशा भुवन १३] सुदर्शना भुवन। सुखावती भुवन पनि भनिन्छ ।

त्यस देखि माथि अकनिष्ठा भुवन १ बुद्ध भुवन, सुखमय भुवन, शून्यता भुवन, अमृतपुर, मोक्षपुर, पनि भनिन्छन् । महापरि निर्वाण पद प्राप्त पछि आफ्नु आफ्नु पंचरस्मि तेजले युक्त गरि सर्वदा [सुप्रभातं प्रभातं] प्रातः समय मात्र भई तथागत-हरू बुद्ध भवनमा विराजमान् हुन्छन् । यो कुरो अर्थ विनिश्चय, धर्म संग्रह- नवसूत्र आदि ग्रन्थमा उल्लिखित छन् ।

तथागत [बुद्ध] हरूको आहार पांच [५] बुझ्नु ।

ध्यान प्रीति आहार १ योग ध्यान समाधिमा प्रेम गरि वस्ने ।

धर्म प्रीति आहार २ धर्म संवाद मात्र सर्वदा प्रेम गरि वस्ने ।

कवलिका आहार ३ भूत्त भविष्य वर्तमान विचारमा प्रेम गर्ने ।

रस्मि स्पर्शा आहार ४ स्व स्व तेजले युक्त गरि आनन्दमय हुने ।

संज उणिकाहार ५ मल मूत्रले रहित, धर्म [वज्र] काय हुने ।

नित्य संभार २

ज्ञान संभार १ जन्म.जरा व्याधि मृत्यु--दुःखले नछुन्ने ज्ञान ।

पुण्य संभार २ जगतो हिताय सत्य धर्ममा वस्ने ज्ञान ।

अनित्य कर्म संभार १

ज्ञान संभार १ पुण्य संभार २ ज्ञान देखि भिन्न व्यवहारमा वस्ने ।

धर्म बुझ्ने

मूल-- अनात्म निर्जीव हेतु प्रभावश्च धर्मः ।

अर्थ- महुं मेरो हुन् मलाई हुन् इत्यादि अहंकार अज्ञानले देख्ने लौकिक (व्यवहार) मा मात्र भुलेर जन्म मरणमा वारंवार घुम्नु पर्ने आत्म ज्ञानले नछोएका जुन अनात्म ज्ञान बुद्ध बोधिसत्वादिहरूले उपदेश विनु भएको- संसार र संसारमा भएको सबै वस्तु अनित्य-- हेतुको प्रभावले मात्र उत्पत्ति भएको हो-- अरू होईन भन्ने ज्ञान बुझ्ने हेतु र प्रभाव निर्जीवलाई धर्म भनिन्छ। अर्थात् अनात्म निर्जीव हेतु प्रभावलाई धर्म भनिन्छ।

## हेतुको अर्थ

मूल— ज्ञान खण्डे। अस्मिन्महामोहमये कटाहे
सूर्येन्दुना रात्रि दिवेन्धनेन।
मासर्तु दर्वी परि घट्टनेन
भूतानि काल पचतीति हेतुः।

अर्थः- संसार महामोह रूपि ठुलो१कराहि समान् हुन्। सोहि कराहिमा मारचर्य-राग द्वेष मोह माया काम क्रोध तृष्णा तथा अभिमान इत्यादि अहुक स्वार्थी व्यवहार लौकिक जन्म मरणको कर्म संभारले च्यापेको चुलाहीमा (भुतुली) तृष्णाको तेलले पूर्ण भएको कराही राखी पकाएको छन्। चन्द्र सूर्य र इन्धन रूपी (काठ दाउरा) वली रहेछन् सर्वदा, अर्थात् ती हुन् रात र दिन।

मास (महिना) १२ वितेमा- ६ ऋतुले भोग गरिन्छन्। उक्त महिना १२ र ६ ऋतु दर्वी, दारू पन्यु भएर चलाई रहेछन्। अर्थ यो हो, महामोह रूपी कराहि यो संसारमा चन्द्र सूर्य रूपी दाउरा भएर अखण्ड वाली रहेकोले, १२ महिना र ६ ऋतु दारू पन्यु भई चलाई- प्राणीहरू सबैको समय विति आयुर्दा (वाचन) सकेर गए। मरियो फेरी जन्म भयो एवं वारं वार जन्म मरणमा प्राप्त भई प्राणीहरूले देख्ने नाम रूपको विषयहरू सबै वस्तु अनित्य हुन्। त्यस्लाई हेतु भनिन्छ- यो संसार यस्तो हेतु हुन्।

## फेरी हेतुको प्रभाव बुझ्नु

शोत- चीसो-आप धातु पानी १ उष्ण तातो आगो तेजो धातु २ पुनः वायु

धातु वतास ३ पृथ्वी धातु माटो, ढुँगा, वालुवा आदि ४ चतुर्महाभूत हुन् । आकाश धातु आकाश समेत् पंच महाभूत भनिन्छ । पंच तत्व पनि भन्ने छन् ।

तो सबै एक गठ्ठा भएर–रज स्त्री–शुक्र पुरूष–संयोग भएर शरीर खारा हुन्छन् । ती शरीरमा तातो र चीसो २ मिलेको हुन्छ ।

चीसो भए मृत्यु भयो, तातो भए बाँच्यो भन्छ । तातो र चीसो २ मिलेको शरीरमा फेरी वायु संयोग भएपछि प्राण वायु भएकोले प्राणी भन्दछन् ।

तातो चीसो वायु यी ३ संयोग भएकोलाई चेतना भनिन्छन् । चेतनालाई– चेतनानुस्मृति पनि भन्दछन् । चित्त र मन हुन् । त्यस देखिन् भिन्न फेरी अरू अलग आत्मा भनेर काहाँ होला । आत्मा हुन्– शरीर– एवं प्रकारले बुझ्ने ज्ञानलाई हेतुको प्रभाव भनिन्छ ।

प्रमाण— ये धर्मा हेतु प्रभावा हेतुस्तेषां तथागतः ।
ह्यवदत्तेषांच यो निरोध एवं वादी महाश्रवणः ।

अर्थः– जुन माथि वताएको ज्ञान बुझी– संसारमा सबै पदार्थ हेतुले मात्र उत्पन्न भएको हुन्-- त्यस्लाई निरोध (रोक्ने) ज्ञान उपदेश दिनु भएको तथागतले हो भन्ने ज्ञान जस्ले बुझीन्छ, त्यसलाई वादी महाश्रवन भनिन्छ ।

## तथागतहरूको निवास स्थान

प्राणी उपर क्षान्ति राखि आफु समान देखेर मित्रता गर्ने परमार्थ ज्ञान हुन् । एवं तथागतहरूको धर्मासन बुझ्ने । सबै वस्तु अनित्य हुनाले देखे तापनि शून्य स्वरूप, अर्थात् शून्यता ज्ञांन (योगाचार) अनात्म निर्वाण प्राप्त गर्नुलाई तथागतको धर्मासिन भनिन्छ ।

पुनः वोधिसत्वको ज्ञान । हेतु र हेतुको प्रभाव बुझी भगवान् बुद्ध उपर श्रद्धाको बेगले अहिंसा धर्म उपाय कुशल मूल धर्मोपदेश दिई भ्रमण गर्नेलाई धर्मभाणक वोधिसत्व भनिन्छ ।

## वोधिसत्वको वस्त्र र गहना बुझ्नु

मूल— धनं त्यागश्च वैराग्यं वोधिसत्वस्य भूषणम् ।
वैराग्यं धन त्यागंच वोधिसत्वस्य वस्त्रकम् ।

अर्थ:– धन त्याग गरि वैराग्य (रागादि छोडी) भ्रमण गर्नेलाई वोधिसत्वको गहना भनिन्छ। वैराग्य भएर पनि धन त्याग गर्नमा सन्तोष हुन सक्नेलाई वोधिसत्वको वस्त्र (पोशाक) भनिन्छ।

व्रोधिसत्व महासत्व बुझ्ने-- प्रज्ञापारमिता २१ परिवर्त, मूलापत्ति ४ प्रकारका छन्। १) हिंसा २) चोरि काम ३) काम मिथ्या ४) झुट्ठा वोल्नु। फेरी अभिमान् अहंकार समेत् गर्ने काम त्याग गर्न सक्नेलाई वोधिसत्व महासत्व भनिन्छ। पुनः जगतो हिताय सुखाय--उपाय कुशल मूल-- ज्ञान ध्यान, प्रज्ञा शील समाधिले युक्त भएकोलाई पनि वोधिसत्व महासत्व भनिन्छ। यस्तो वोधिसत्व महासत्वहरू क्रमशः अनुत्तर संम्यक संबुद्ध भगवान्को वोधिज्ञान प्राप्त गरि-- अर्हत् बुद्ध पछि अवश्य हुनेछन्।

तथागतको चीवर वस्त्र बुझ्नु, सद्धर्म पुण्डरीक सूत्र धर्म भाणक परिवर्त श्लोक २४ ।

मूल— मैत्रावलंच लयनं क्षान्ति सौरत्य चीवरम् ।
शून्यताचासनं मह्य मत्रस्थित्वा हिदेशयेत् ।

अर्थ:-- सबै प्राणीहरूलाई मित्र भावनाको वल धारण गरी, क्षान्ति मार्गको मालीक भई सुखानन्द हुने धर्मोपदेश दिई शून्यता ज्ञान धारण गरी वस्न सक्नेलाई बुद्धको चीवर वस्त्र प्राप्त गरेको भनिन्छ।

## बुद्धोपदेश

अभिसमयालंकारमा उल्लिखित श्रावक प्रत्येक र महायान यी त्रिविधयानलाई बुद्धयान भनिन्छ। बुद्ध एक महामानव हो। वहाँको ज्ञानलाई विमान भनिन्छ, अनि त्यहि विमान हो यान।

बुद्धयानमा स्वभाव शुद्ध हुनु पर्छ जसमा ४८ वल शीलको पालन हुनु अत्यन्त

जरूरो छन्।

१] सत्यतामा एक चित्त हुनु २] पाप नाश गर्नको लागी उत्तम कार्य गर्नु। ३] परको दुःखमा सहयोग गर्न सकभर कोशिश गर्नु। ४] सबै प्राणी सुखको लागी अथक काम गर्नु। ५] क्षमाशील हुनु। ६] समदर्शी हुनु। ७] दुःख र सुख समान होस् भन्ने राम्रो बुझी त्यसमा असल कायम गर्नु। ८] आफ्नो क्षमतानुसार परोपकारी हुनु। ९] जुनसुकै काममा पनि चित्त चंचल नबनाउनु। १०] दश ईन्द्रियलाई जित्नु ११] कोमल भई चित्त शुद्ध गर्नु। १२] अरूलाई पीर र अशान्ति नदिनु। १३] कसैको निन्दा अवहेलना र हास्य काम नगर्नु। १४] सार नभएको काम कदापि नगर्नु र कसैलाई नभन्नु पनि। १५] आफु संतुष्ट भई अरूको परिश्रममा नबाँच्नु। १६] बोधिज्ञानमा निश्चित भई सत्यवादी बुद्ध धर्म अहिंसा हुन् भन्ने राम्ररी चिन्नु। १७] अहिंसा चर्यमा दत्त चित्त हुनु। १८] अनात्म ज्ञान चिन्नु र त्यस्मा अमल हुनु। १९] अविद्या अज्ञान काल बुद्धि सधैंको निम्ति त्याग गर्नु। २०] अधैर्य भई अहंकार र अभिमान हुनु सधैंको लागी परि त्याग गर्नु। २१] धैर्यवान् क्रयाशील भई प्राणी उपरमा दयावान् हुनु। २२] सुज्ञान दिने गुरूको सेवा गर्नु। २३] सभामा उत्तम उपदेश दिन सक्नेलाई गुरू मान्नु। २४] अशुचि छोडि शील स्वभावमा पर्नेलाई गुरू मान्नु। २५] मुर्ख र दुष्टलाई चिनी उनीहरू माथि विश्वास र भरोसा नगर्नु। २६] सबै-लाई प्रेम गर्ने मैत्रीभाव चित्त सम्म हुनेलाई सदा मित्र बनाउनु २७] मुर्ख र दुष्टको अगादि सकभर नबोल्नु। २८] हिंसक ब्याधा बृत्तिहरू संग संगत नगर्नु। २९] सहन शील भई बोधियानमा प्रमुख हुनु। ३०] त्यागी भई वैराग चित्तले अरूलाई उद्धार हुने कार्य गर्नु। ३१] तामसी परि पंचमा नदुल्नु। ३२] तामसी काम नलाग्ने अन्ध विश्वास धर्म मान्ने संग मित्र नबनाउनु। ३३] अकुशल त्याग गरी कुशल ज्ञानमा बस्नु। ३४] मिथ्याचारीहरूसित संगत नगर्नु। ३५] आफु-लाई र अरूलाई शान्ति नहुने कुरा कहिले पनि नबोल्नु। ३६] रोग निवारण

नगर्ने अज्ञानी व्यक्तिलाई अल्सी नवनी ज्ञानी बनाउनु । ३७] आकाश भन्दा निर्मल समुद्र भन्दा गहिरो बुद्ध धर्ममा वसी ज्ञानोपदेश दिने गुरूको सदा भक्ती गर्नु । ३८] आफु र परलाई दु:ख हुने धर्म नमान्नु । ३९] मिथ्या दृष्टिमा कहिले नलाग्नु । ४०] लौकिक व्यवहार त्याग गरी लोकोत्तर (अरूलाई) हित हुने धर्म चिन्नु । ४१] बुद्धि लोप हुने अमल पदार्थ त्याग गर्न सक्नु । ४२] क्रोधी र कामी भई मारको वसमा पर्ने काम नगर्नु । ४३] मोहादि लोभले ढाकिएको संसार अनित्य हो भनि जान्नु अविद्या सित नलागी बुद्ध ज्ञान सुन्नु । ४४] बुद्ध ज्ञान उत्तम भनी चिनी खुसी हुनु । ४५] कल्याण मित्र चिह्नाउने व्यक्तिको खोज गर्नु । ४६] शुद्धाचरणमा वसी सुगन्ध सेवा गर्न सित संगत गर्नु । ४७] पाप लुप्त हुने पुण्य उत्पत्ति हुने उत्तम धर्ममा वस्ने । ४८] जत्तिसुकै बुद्धिमान भए तापनि जान्ने विद्वाँन्लाई तिरस्कार (खिसी) गर्ने संग संगत नगर्नु ।

## आठ वटा दोष

१) नरकमा वास गर्नेहरू तातो र चीसो मात्र भोग गर्नु परेकोले धर्मगर्न समय छैन ।

२) प्रेत पिशाचहरूको पानीको प्यासले गर्दा धर्म गर्न समय छैन ।

३) तीर्यक पशु पंछीहरू दुर्गन्ध ठाउंमा वसी घाँस कीटाणु आहार-मैथुन-भय-त्रास निद्रा मात्र भुलेकोले धर्म गर्नुलाई समय छैन ।

४) देवतादिको सुख भोगमा लुप्तभई संज्ञा सुविचार नभएकोले धर्मगर्न समय छैन ।

५) जंगल वासीहरूको वोधिज्ञान सुन्न नपाउँदा धर्म गर्न समय छैन ।

६) नास्तिकवादीहरू अरूको निन्दा मात्र हुंदा धर्म गर्न समय छैन ।

७) अन्ध कल्पमा जन्म हुने दैत्य राक्षसादिहरूको मदिरा मांसाहार मात्र प्रेम हुनाले धर्म गर्न समय छैन ।

८) लाता लाती (गुंगिर गुंगाले) हरू विज्ञानको काम नजानेर धर्म गर्न समय छैन ।

## यान बुझ्ने
## सद्धर्म पुण्डरीक सूत्र श्लोक ५४ अध्याय २ मा

मूल— एकं हि यानं द्वितीयं नविद्यते तृतीयं हि नै वास्ति कदाचि लोके ।
अन्यत्रु पाया पुरूषोत्तमानां यद्यान नायातु दर्शयन्ति ।

अर्थः— यो संसारमा एउटै मात्र यान हुन्- अलग अलग अनेक यान होईन । पृथक पृथक अनेक यान देखाईएको महत्व अवस्था हेरी प्राणी सबैलाई उद्धार गर्नुको लागी मात्र हो, प्राणी सबैलाई उद्धार गर्नको लागी उपाय कुशल मूल मात्र देखाईएको हो ।

उदाहरण, एक संसार अथवा ठुलो एक घरको भित्र चोकमा धेरै वालकहरू खेलीरहे छन् ।

एक करूणा धारी कृपालु (दयावान्) पिताले हेरी रहेछ । त्यस ठाउँमा चारै-तिरवाट आगो वलेर आए । वालकहरू अज्ञानताले आगो वलिरहेको स्थानमा वस्न ठिक छैन भन्ने थाहा नभई त्यहीं वसेर खेलिरहेको देखि- दयालु पिताले ठुलो शब्द गरि त्यहाँ तिमीहरू वस्न ठिक छैन- यथाशीघ्र वाहीर आउ भनि वोलाए- वास्ता नगरी त्यहीं वसीरहे । त्यसवखतमा- मृगरथ, अश्वरथ, गोरथ, नाम ३ प्रकारको रथ (खेलौना) वनाई देखाई दाके- यी रथहरू जुन् जुन् मन परेको छन् तिमीहरू वाहिर आई लिंन आउने काम गर ।

मृगरथ राम्रो मृगहरू वस्ने रथ- अश्वरथ राम्रो घोडा भएको रथ, गोरथ राम्रो गाई भएका रथ हुन् ।

यसरी रथ वनाई देखाई लिन आउ भनेर वोलाएको शब्द सुनी आगो बलेको घर छोडी वालकहरू वाहिर आई आफ्नु इच्छानुसारको रथ लिएर वसे । आगोको भयदेखि मुक्त भएका वालकहरू खुसि भए ।

भगवान् बुद्धले भन्नु भयो- हे शालिपुत्र भिक्षु आदि ! तिमीहरूले यस विषयमा के विचार छ भन । सबै शिष्यहरूले त्रिप्रदक्षिणा र प्रणाम गरी शालिपुत्र भिक्षुले

विन्ति गरे ।

भो भगवान्– प्रवोधोऽवं– सुगत प्रवोधोऽहम् ।

भो भगवान्– बुझें– भो सुगत गुरू– राम्रसंग थाहा पाएं। ठुलो एक घर यो संसार हो, चारैतिर वाट आगो वलेको रागादि अनेक हो, भित्र वसी खेलेका वालकहरू अज्ञानता मनुष्यादि हुन्– ३ प्रकारको रथ वनाई देखाई वाहीर आउने कामगर इत्यादि शब्दले वोलाई दाकेको दयालु पिता तपाई भगवान् बुद्ध गुरू हुन् ।

यस प्रकारले विन्ति गरेको सुनि पुनः भगवान्ले आज्ञा गर्न भए । साधु साधु तिमीहरूले थाहा पायो– राम्ररी बुझ्नु– मृगरथ श्रावकयान १ अश्वरथ प्रत्येक यान २ गोरथ महायान ३ यी ३ (तिन) रथ लिएर वाहिर आएका संसार वाट मुक्त भए ।

३ रथलाई वास्ता नगरी घर भित्रै वसेका अज्ञानी वालकहरू– रागादि अनेक प्रकारका दुःखरूपी आगोले दाह भई मरे ।

वालक रूपि मनुष्यहरूलाई र जगत् हितका निमित्त अर्थात् उपाय कुशल मूल– प्राणीहरू उद्धार गर्नाका निमित्त– प्राणीहरूलाई उपाय गर्ने कुशल कर्मको मूल हो– त्रिविधयान अरू होईन ।

आर्य नामसंगीति समता ज्ञान गाथा १७ श्लोकः–

नाना यान नयोपाय जगदर्थ विभाजकः ।
यान चितय निर्यात एक यान फलेस्थितः ।

अर्थः-- नाना प्रकारको यान ( त्रियान ) तीन प्रकारको रथ श्रावक प्रत्येक महायान-- बुद्ध चर्यको मार्ग मात्र हो-- अरू होईन-- प्राणीहरूलाई उपाय गर्नका लागी मात्र खेलाना यान हो विमान देखाईएका हुन् आखिरमा एकै यानको फल बुद्ध यान मात्र हुन्छ।

उदाहरणः– त्रियान एक गठ्ठा भई धनुष वनिन्छ-- ज्ञान रूपी वाणले अज्ञानलाई प्रहार गरि-- अज्ञान अन्धकार नाश गरेर प्राणीहरूलाई उद्धार गर्ने उपाय कौशल्य

मूत्र मात्र हुन्छ ।

जुनसुकै यान अपनाए तापनि बुद्धको बाटो हो, आखिरमा निर्वाण प्राप्त नै यसको लक्ष हुन आउँछ । त्यसैले एउटै बुद्ध धर्ममा म श्रावक तिमी प्रत्येक र उ महायान भनि कलह र द्वेष राख्नु-- बुद्धोपदेशमा लाञ्छना र अवहेलना गर्नु मात्र हो ।

उत्तम बुद्ध धर्ममा निर्वाण प्राप्त गर्न (४) चारवटा मार्ग छन् । १] श्रोत्तापत्ति मार्ग २] सक्रदागामी मार्ग ३] अनागामी मार्ग ४] अर्हत् मार्ग ।

१] श्रोत्तापति मार्गः-- अरूको कुरा सुन्नाले या होहल्लामा लाउनाले खालि मन अशान्ति भई द्वेष र बलदाको भाव उत्पत्ति हुन्छ यो पनि आत्माको स्थिति मान्ने एउटा तरिका हुन जान्छ र हिंसाप्रव कर्ममा चित्त लाग्गी चाहना बढी हुन गई रागादि दोषले मनमा गहिरो स्थान प्राप्त गर्न सक्छ त्यसैले कुनै होहल्लामा नफसि बुद्ध धर्म र संघ सम्झी उनैको रस्मी सुखवले विस्तारै निर्वाण पथमा पाईला टेक्नु पर्छ यसैलाई श्रोत्तापत्ति मार्ग भनिन्छ ।

२] सकृदागामी मार्गः-- इन्द्रियको मोहले गर्दा त्यसैमा लुप्त भई मनलाई भाव अस्थिर चंचल बनाई उनमा बुवा र आमा एवं पत्नीको मोहले गर्दा यसको अनुभोग गर्न फेरि फेरि संसारमा जन्म र मरणको चक्रमा घुम्न आउनु पर्ने हुनाले अवदेखि यस्तो मोहमा फस्न चेतिसके भनि मनमा ज्ञान उत्पन्न गराई ती सव क्षणिक सुखरूपी वन्धनलाई त्यागी बुद्ध धर्म र संघ चिनी सद्गुरूको स्थान गई राम्ररी सिकि विस्तार विस्तारै निर्वाण प्राप्त गर्ने सिढीमा पाईला टेक्नु यसैलाई सक्तदागामी मार्ग भनिन्छ ।

३] अनागामी मार्गः-- अब फेरी यस्तो अनित्य संसारमा फर्कन चाहन्न भनि सत्कार्य गर्नु, कहिले खेचर भनी पंछी, कहिले भूचर भनी पृथ्वी मै मानव बन्नु कहिले पापी कहलाई नरक भोग, कहिले स्वर्गमा देव भई यसरी घुमी घुमी जन्म र मरण हुने धर्म र पाप नगरी बुद्ध धर्म र संघ चिनी प्रज्ञा शील समाधिको लौरोटेकी विस्तारै निर्वाण प्राप्त गर्नु नै अनागामी मार्ग भनिन्छ ।

४] अर्हत् मार्ग चिन्नु:-- यस्मा पाँचवटा अक मार्ग अपनाउनु पर्छ । १) नाम रूप रस राग तृष्णा २) अरूप राग माया मोहादि ३) मान क्रोध ४) औद्धत्य, काम ५) अविद्या अज्ञान अहंकार र अभिमान । यो ज्ञान प्राप्त गरी सके पछि फेरी संसारको चक्र काट्न आउनु पर्ने छैन र समस्त पाप नाशवान् हुनेछ । पुनर्जन्म बाट मुक्त भई बुद्धानुस्मृति धर्मानुस्मृति र संघानुस्मृति भई विस्तारै निर्वाण प्राप्त गर्नमा पूर्णतया समर्थ हुनेछ ।

श्रावक यान एउटा मात्र बुद्ध धर्म र संघ मान्ने यान होईन । प्रत्येक यान बोधिसत्व पारमिताले पूर्ण भएको र बुद्ध धर्म संघको प्रभाव गुण चिन्ने पूर्वोक्त निर्वाण मार्गमा पाईला टेक्ने हो । यहि महायान चर्यमा पनि पारमिता पूर्ण गरी विस्तारै पूर्वोक्त ज्ञानमा पाहिला हाली निर्वाण मार्गको फल प्राप्त गर्न तरीका हो ।

त्रियानको अर्थ माथी नै भनि सकिएको छ कि श्रावक निर्वाण, प्रत्येक निर्वाण, र महायान निर्वाण यो तीनै यान निर्वाणको लागी बाटो हो । अन्त्यमा लहरा एउटै हुन आउँछ ।

त्यसैले श्रावक यानमा एउटा बुद्ध, प्रत्येक यानमा एउटा बुद्ध, महायानमा अर्को बुद्ध छैन । बुद्ध एउटै हो तर भावना अनेक हुन सक्छन् ।

सत्य युगोदय विपश्चि आदि बुद्ध देखि एवं त्रेता युगमा-- दीपंकर भगवान् बुद्ध र बुद्ध सांघिकहरू सबैलाई-- नेपाल दीपावती नगर (गुईत) सुप्रशन्न शील विहारमा निमन्त्रणा, एवं रत्न कोशवती देशमा क्रकूछन्द बुद्ध र बुद्धसांघिक सबैलाई रत्नकेतु राजाले निमन्त्रणा गरी सम्यक संबुद्ध महायान बुद्ध चर्य द्वारा पूजादि पिण्ड पात्रावदानको प्रमाणानुसारले चीवर पिण्ड पात्र अन्न बृहि फल रोति दक्षिणादि श्रद्धा पूर्वक पंचामृत संयुक्त क्षीर (भात) ओदन शुद्ध भोजन प्रदान गर्नु भएको सबै कुरा-- पछि कलियुगको प्रथम चरणमा जन्म, शाक्य मुनि बुद्ध भगवान्ले उपदेश दिनु भएको उक्त लिखित महायान नव सूत्रादि ग्रन्थहरू नेपाल देशमा विद्यमान् भए तापनि-- शाक्य मुनि बुद्ध निर्वाण पाँच सय वर्ष पछि मात्र महायान धर्मको विकसित

भई आएको हो भन्ने कोहि आचार्यहरूको निराथार भनाई छन् ।

विपश्वि आदि दीपंकर भगवान् बुद्ध र संम्यक संबुद्ध महायान बुद्धचर्य– शाक्य मुनि भगवान् बुद्ध निर्वाण पाँच सय वर्ष पछि विकशित भई आएको निराधार हुन् भन्ने ज्ञान नव सूत्रादि अध्ययन गरे पूर्णरूपले विदित हुन्छन् । पछि भैरव चक्र नेपाल मा प्रवल भई आएकोले महायान धर्म भन्दै बुद्धचर्यमा विविध प्रकारको अनाचार मानी आएको हुनाले धेरै विद्वानहरूले खिसि गरेको मात्र हुन् ।

धर्म हो अहिंसा– पाप हो हिंसा । सत्य हो कुशल कर्म– आर्य अष्टांगमार्ग, प्रज्ञा शील समाधि । निर्वाण हुन्- जन्म मरण देखि मुक्त हुने ।

## बुद्ध नीति

मूलः— अधनो धन मिछन्ति वादमिछन्ति गर्विताः ।
मानवो मान मिछन्ति स्वर्ग मिछन्ति लौकिकाः ।
पितरो वाक्य मिछन्ति भाव मिछन्ति देवताः ।
मुनयोज्ञान मिछन्ति मोक्ष मिछन्ति योगिनः ।
भ्रमराः पुष्प मिछन्ति गुण मिछन्ति सज्जनाः ।
मछिको गुण मिछन्ति दोष मिछन्ति दुर्जनाः ।

अर्थः– दरिद्रहरू धन इच्छागर्छन । स्त्रीहरू धेरै कुरा गर्ने छन् ।मनुष्यहरू मानइच्छा गर्छन्– व्यवहारमा वसेकाले स्वर्गको इच्छा गर्छन । पितृ देवता वाक्यइच्छा गर्छन् । देवताहरू भावइच्छा गर्छन् । मुनिहरू ज्ञानइच्छा गर्छन् । योगीहरू मोक्षइच्छा गर्छन् । भ्रमराहरू सुगन्ध पुष्पको वासना ईच्छागर्छन् । सज्जनहरू गुण इच्छा गर्छन्। झिंगा-हरू दुर्गन्ध वस्तु इच्छा गर्छन् । मुर्ख दुर्जनहरू– दोष इच्छा गर्छन् ।

## आहार विचार

मूलः— दानवो मद्य मिछन्ति मांस मिछन्ति कौणपाः ।
ऋषय : फल मिछन्ति दुग्ध मिछन्ति श्रीधनाः ।

अर्थः– दैत्यहरू मदिरा पान गर्नेमात्र इच्छा गर्छन् । राक्षसहरू मांस खाने मात्र इच्छा गर्छन् । ऋषिहरू फलाहार मात्र इच्छा गर्छन् । भगवान बुद्ध वोधिसत्वहरू

पंचामृत क्षीर आदि दुध इच्छा गर्छन् ।

## ईश्वर कहां छन् – ज्ञानोदय तंत्रमा

मूलः— न देवो विद्यते काष्ठे पाषाण नच मृण्मये ।
भावो हिविद्यते देव तस्मात् भावो हि कारणम् ।

**अर्थः– काठ् ईठ् धुंगा आदिमा ईश्वर (देवतादि) हुन्दैन, ईश्वर हो देवताहरू भाव भक्तिमा हुन्छन् । त्यस कारण भाव भक्ति गर्नु योग्य हुन्छ निश्चय ।**

मूल.— धीमान् देवान् नच वन्दे काष्ठ पाषाण मृत्मयान् ।
चित्तादेव भवन्तीति कल्पिते भाव हेतुना ।

**अर्थः– बुद्धिमान् ज्ञानी काठ् ईठ् धुंगा माटोमा प्रणाम गर्दैन, चित्तलाई मात्र दमन गरि भावको हेतु कल्पना गर्दछ ।**

मूलः— नमोऽस्तु बुद्धाय कृतक वारं एहि तथा धातु धरेषु तेषु –
इत्यादि सद्धर्म पुण्डरीकमा प्रमाण छ ।

**अर्थः– धातु अनेक वस्तुलाई प्रणाम गर्ने छोडि-- भगवान् बुद्धलाई मात्र स्मरण गरि मूर्ति देखे पनि एकवार मात्र प्रणाम गर्ने योग्य छ भन्ने निश्चय गर्छ ।**

## भगवान् शब्दको अर्थ
## अशोकावदान र ब्रतावदानमा--।

(भ) मूलः— भकारो भंजयेन्मारान् भव संपद तर्जयेत् ।
भवोदधेः समुत्तार्य भ्रामयेत्सुगतालये ।

(ग) गकारो गमयेज्ज्ञीर्णं गंभीर ज्ञान साधने ।
गत्यगति विशुद्धांच सौगति प्रवरागतिम् ।

(वा) वाकारोच्चारयैत् वाणी बगदेवो संप्रसादिता ।
वागीश्वर पदंबापि वाक्यालंकार शोभितम् ।

(न) नरकगति नाशाय नरोत्तम पदाप्तये ।
नराधि पति नाथाय नकाराय नमः सदा ।

**अर्थः- भकारले मारहरू सबैलाई भगाई जितेर- अनित्य संसारको रचना त्याग गरि संसार समुद्रबाट तरेर बुद्ध भूमीमा भ्रमण गर्ने । १ ।**

**गकारले महासागर समान गंभीर ज्ञान साधन गरि गति र अगतिको बिशुद्धि र**

षट्गतिको प्रभाव बुझी सुगतीमा प्राप्त हुने । २ ।

वाकारले, सत्य वचन द्वारा प्रज्ञा शील समाधिको ज्ञान बुझ्ने, वाकदेवी (प्रज्ञा-देवी) का ज्ञाना मृतरस प्रसाद हो- वागीश्वर सम्यक वचन सत्यवादीको पद शुद्ध वाक्य अहिंसा धर्मका अलंकारले सुशोभित भएका हुन् । ३ ।

नरक गति नाश गर्नका निमित्त उत्तम महामानव पद प्राप्त गरि- मनुष्यादि सबैको मालिक परम गुरूलाई सर्वदा नकार अक्षर स्मरण गरि नमस्कार । ४ ।

सून्यता ज्ञान २ दुई प्रकारका छन् ।

१) नदेखेको २) देखेको-दृष्टान्त बुझ्नु- जस्तै दुध र उखुको रसमा गुलियो छँन् । तथा दहिमा ध्यौ, तिलमा र सर्ष्यौं मा तेल भए तापनि देखदैन- नदेखेका वस्तु यन्त्र द्वारा निकाल्दछन् । त्यसलाई सून्यता भनिन्छ ।

२) ऐना र पानी भएको पोखरीमा अथवा इनारमा अघाडिमा भएको वस्तु देखिन्छन् यी नभएको वस्तु देखे तापनि सून्यता भनिन्छन् । त्यस्तै संसारको प्रकृति एवं हेतुको प्रभाव बुझेपछि बुद्धोपदेश गौरव वोधिज्ञान र प्रज्ञा ज्ञान राम्रे संग बुझिन्छ ।

यस्तो प्रज्ञाज्ञानको रसलाई वोधिज्ञानामृत, वोधिचित्तामृत, र वोधिज्ञान हो बुद्धज्ञानको अमृत, वोधिचित्त हो ज्ञानको अमृत- बुद्ध पूजादिमा पान गरि बुद्ध सिद्धि लाभ गर्नु ।

स्तोत्रः— एवंकार समासिनं सहजानन्द रूपिणीम् ।
प्रज्ञाज्ञान स्थितादेवी नमामि वज्रयोगिनीम् ।

अर्थः-- एकार प्रज्ञा--ज्ञान वंकार उपाय-ज्ञान यी दुई संयोगले प्रज्ञोपाय द्वाकार रहस्यमय गौरव सहजयान आनन्द स्वरूप--सून्यता प्रज्ञा ज्ञानमा विराजमान भएकी वज्रयानी वज्रयोगिनी देवीलाई नमस्कार ।

वज्रयानीको अर्थ हो-- विविध प्रकारको आहार पूजा देखी अलग भएका हुन् । एवं श्रावक, प्रत्येक-महायान-वज्रयान-तंत्रयान-सहजयान आदि सबै बुद्धयान हुन्--

बुद्धयानमा माथि उल्लिखित भएको चर्य बोधगर्नु योग्य हुन्छन् ।

आर्येति स्कन्ध तंत्रे ३५ तथागत (बुद्ध) हरूको नामावली

| | | | | |
|---|---|---|---|---|
| सुमेरू गर्भ | त० | १ | प्रभाषश्रीय | १९ |
| वज्र गर्भ | " | २ | धर्म कोषश्रीय | २० |
| रत्नवीर्य | " | ३ | नारायणश्रीय | २१ |
| नागेश्वर | " | ४ | कुसुमश्रीय | २२ |
| वीरशेन | " | ५ | पद्मज्योतिविक्रीडित | २३ |
| रत्नोग्नय | " | ६ | रस्मि श्रीसुमेरू गर्भ | २४ |
| रत्नचन्द्र | " | ७ | सुधनविचित्र | २५ |
| अमोघदर्शी | " | ८ | धर्मस्मृतिश्रीय | २६ |
| रत्नचन्द्रप्रभ | " | ९ | सुपरिकीर्तिन | २७ |
| निर्मलश्रीय | " | १० | इन्द्रकेतु ध्वज | २८ |
| विमलप्रभ | " | ११ | सुविक्रान्त | २९ |
| सुरतश्रीय | " | १२ | विचित्र चक्रमश्रीय | ३० |
| ब्रंह्मप्रभ | " | १३ | विक्रान्तग्रामिन | ३१ |
| ब्रंह्मश्रीय | " | १४ | समन्तावभाषश्रीय | ३२ |
| वरूणावभाषमकुट | " | १५ | रत्न पद्मसुप्रतिष्ठित | ३३ |
| तंत्रश्रीय | " | १६ | विमल धर्म-पर्वट शिषराज | ३४ |
| चन्द्रश्रीय | " | १७ | शाक्यमुनि | ३५ |
| अनन्तश्रीय | " | १८ | | |

बुद्ध जीवनी तंत्रे २५ तथागत (बुद्ध) हरूको नामावली

| | | | |
|---|---|---|---|
| दीपंकर बुद्ध | १ | अर्थदर्शी बुद्ध | १४ |

| | | | |
|---|---|---|---|
| कोण्डिन्य बुद्ध | २ | धर्मदर्शी बुद्ध | १५ |
| मंगल बुद्ध | ३ | सुधर्म बुद्ध | १६ |
| सुमन बुद्ध | ४ | तिसर बुद्ध | १७ |
| रेवत बुद्ध | ५ | प्रशरण बुद्ध | १८ |
| सोभित बुद्ध | ६ | विप्रशरण बुद्ध | १९ (विपश्वि) |
| अनोपदर्शी बुद्ध | ७ | शिखिवी बुद्ध | २० |
| पद्रुम बुद्ध | ८ | विश्वभू बुद्ध | २१ |
| नारद बुद्ध | ९ | ककूछन्द बुद्ध | २२ |
| पद्मोत्तर बुद्ध | १० | कोनागमन बुद्ध (कनकमुनि बुद्ध) | २३ |
| सुमेधर बुद्ध | ११ | काश्यप बुद्ध | २४ |
| सुजाल बुद्ध | १२ | गौतम बुद्ध | २५ |
| प्रियदर्शी बुद्ध | १३ | | |

दुर्गति परिशोधन तंत्रमा

तथागत ९ को नामावली--

१] वज्रोष्णीष तथागत २] रत्नोष्णीषत० ३] पद्मोष्णीष त्त० ४] विश्वष्णीष त० ५] तेजोष्णीष त० ६] ध्वजोष्णीष त० ७] तीष्णोष्णीष त० ८] छत्रोष्णीष त० ९] शाक्यमुनि त० ।

व्रतावदान माला

संपत्ति ३ प्रकारको छन्

१] धन संपत्ति, इहलोक जन्मदेखी नमरेसम्मलाई पालन पोषण गर्ने गृहस्थि व्यवहारको धर्म कार्य सफल गर्नमा आवश्यक हुने ।

२] ज्ञान संपत्ति, जन्म जन्ममा विद्वाँन् भई अविद्यादि नित्य र अनित्य कुशल अकुशल कर्म सबै विदित भएर जगत् हित गर्ने शुभ कार्यमा आवश्यक हुने ।



३] पुण्य संपत्ति, धर्म हो, परलोक भई कर्म भूमीमा यमशासनादि नरक भोगको दुःखवाट मुक्त भएर मैत्री र करूणाका दृष्टिले सबै प्राणीलाई उपकार हुने कार्यको उद्योग गर्न सक्ने अर्हत् बुद्ध भई निर्वाण प्राप्तमा आवश्यक हुने ।

ध्यान ४ विचार

१] प्रथम ध्यान, चित्तलाई दमन गरि एकाग्र भावले अर्थात् चित्त (मन) लाई समाधान गरेर सबै प्राणीहरूलाई मित्रता समान गर्ने ।



२] द्वितीय ध्यान, अनेक तर्क वितर्क छोडी भित्र शान्ति चित्तको एकाग्रता स्थापित हुन सक्ने गरि सबै प्राणीमा करूणाको रसपान गराउनका निमित्त स्थीरासन गर्ने ।



३] तृतीय ध्यान, चित्तमा अशान्ति दुःख हुन आउने सबै दूर गरि शान्ति सुख ल्याउने हर्षोत्सुकले आनन्ददायी निश्चल भएर सबै प्राणी उपर कल्याण हुनेमा स्थीर गरि वस्ने ।



४] चतुर्थ ध्यान, चित्त (मन) मा सुख दुःख इत्यादिहरू सबै त्याग गरेर, सर्व वस्तु अनित्य एवं शरीर आत्मा भव दुःख वाट जन्म मरण गर्ने हो भन्ने बुझी निर्वाण ज्ञान (वोधि ज्ञान) मा चित्त राखि स्थीरासन गर्ने ।

शुद्ध आहार

योग ध्यान समाधि एवं तप आदि शुभकार्यमा आहार गर्नु पर्ने पहिले बुझ्नु, फल पंचामृतादि रस क्षीर रोति शुद्ध सुगन्ध अन्नहरू हुन् ।

आमिष दुर्गन्ध वस्तु मदकारी (मदिरा पान) स्तमो गुण हुने मांस आदिको आहार निशेध गर्न सके मात्र यी सबै कार्य यथाशीघ्र सफल हुनेछ भन्ने बुद्धोपदेश

ठुलो ठुलो ग्रन्थमा उल्लिखित भएको छ ।

## अनात्म वाद

### बुद्ध शतक एवं वौद्ध दर्शनमा उल्लिखित

मूलः— आत्म बुद्धि रिह यस्य जायते
साच तस्य जनये दहं ऽतिम् ।
सा तनोति सुतरां भवस्पृहां
सैव मोह जननी मुहुर्मुहुः

अर्थः– जस्को यहाँ रूपादि पंचस्कन्धको आत्म बुद्धि उत्पत्ति हुन्छ, त्यो आत्म बुद्धि जनको अहंकार वारंवार उत्पत्ति भएर– त्यस आत्म बुद्धि मानवको सर्वदा– अत्यन्त भव सागरे (संसार) मा पुनः पुनः तृष्णादि मोहमा परि जन्म लिन आउँछ।

मूल— तेन कर्म कुरुते शुभाशुभं
तभ्दि दुःख जनकं भवत्रये ।
दुःख मूल मतएव सात्मधी
स्तां लुनाहि जिन मे वचोसिना ।

अर्थः– त्यहिं तृष्णादि मोहले कुशल अकुशल (शुभ अशुभ) काम गर्दछ। स्वर्ग मर्त्य पाताल तिनै लोकमा दुःखदायी काम भव तृष्णादि भोग निश्चयमेव उत्पत्ति हुन आउँछ। यस कारणले ती आत्म बुद्धि मानव दुःख मूल हो, संसार भोगको कारणमा पर्नेछ ।

अतः मेरो आत्म दृष्टि (आत्म ज्ञान) हे मुने– सम्बुद्ध भगवान्! तपाईको उमृत वचन रूपी खड्गले काति दिनु होस् ।

भगवान् पक्का अनात्मवादी हो। यो अनात्मवाद बुद्ध धर्मका दार्शनिक वलियो हुन्। आत्मवादका, सुगत भगवान् बुद्धले खण्डन वहि अभिनिवेशको साथ गर्नु हुन्छ। खण्डन गर्नु भएको कारण यहि वीज होकि, वखतबखतमा आत्मवादी मानव आत्माका स्वरूप मंगल हो भन्ने ज्ञानले नाना प्रकारका सत्कर्म तथा दुष्कर्मको भोग गर्दछन्। यो सिद्धान्तका ज्ञान दीप बुद्धले भन्नु भएको उत्तमोत्तम अनित्य आत्मा

शरीर मात्र हुन्, अरू होईन ।

कोहि मूर्खता हो भन्दछ, आत्मा निश्चय परम देवता मान्नेहरूलाई बुद्ध अत्यन्त तुच्छ बुद्धि देखदछ– जुन यो आत्मा ठुलो गरि अनुभव गर्ने, बुद्ध ज्ञान तथा बुद्धले वाल बुद्धि विलकुल वाल धर्म मानिन्छ । (अयं भिक्खवे केवलो परि पूरो वाल धम्मो) यो हे भिक्षुहरू ! केवल परिपूर्ण वाल बुद्धिको धर्म हो, अतः बुद्धले यस अनात्मवाद ज्ञानमा भीतर गौरव रहस्यमय एवं सुन्दर निर्वाण यथाशीघ्र प्राप्ति हुने सुगन्ध ज्ञान छ भन्ने अमृतोपदेश सर्वत्र स्थानमा भ्रमण गर्नु भई सार नित्य सर्वोत्तम श्रेष्ठ जनकल्याणकारी वोधिज्ञान संसारमा बृष्टिगर्नु भएको हामीहरू सबैले धारण गर्न अवश्य योग्य हुनेछ ।

इति श्री महायान बुद्ध धर्म दर्शन संक्षिप्तं समाप्तम् । ये धर्मा हेतुप्रभावा हेतुस्तषां तथागतः । ह्यवदत्तेषांच, यो निरोध एवं वादी महाश्रवणः ।

। शुभम् ।



## लेखकको प्रकाशन भएको पुस्तकहरु

| | | | | |
|---|---|---|---|---|
| १) बुद्धवृष जन्म कथा— | | २०१० साल | प्रथमबार | १००० |
| २) नेपाल वर्ष क्रिया नख चख— | | २०११ " | " | १००० |
| ३) सूर्योदय राजाया कथा— | | २०१३ " | " | ५०० |
| ४) स्तोत्र दर्पण— | ने. सं. | १०७५ " | " | ५०० |
| " | ने. सं. | १०७७ " | द्वि. बा. | ५०० |
| ५) स्तोत्र दर्पणया स्तोत्र संग्रह यागु | ने. सं. | १०८६ " | तृ. बा. | ५०० |
| ६). बुंगद्यः नेपाले हगुयागु वंशावली | बि. सं. | २०१४ " | प्र. बा. | ५०० |
| " " | | २०२४ " | द्वि. बा. | १००० |
| ७) गुणवती कथा | | २०१६ " | प्र. बा. | ३०० |
| " | | २०२८ " | द्वि. बा. | १००० |
| ८) नेपाल भाषा देव स्तोत्र | | २०१६ " | प्र. बा. | ५०० |
| ९) अन्त्य शान्ति क्रिया | | २०२३ " | " | ३०० |
| १०) नेपाल तीर्थ व्रत | | २०२७ " | " | १००० |
| ११) सर्वानन्द नृप जातक | | २०२५ " | " | १००० |
| १२) सँन्हू गुठी–सुरदत्त कथा | | २०२९ " | " | १००० |
| १३) बुद्ध धर्म दर्शन | | २०३३ " | " | ५०० |

### पुस्तक पाइने स्थानः—

**लेखक र प्रकाशकः—**

पं. बँ. आशाकाजी बज्राचार्य

ललितपुर, अथननि

मुद्रकः— सुभाष प्रिन्टिङ्ग प्रेस नकबहिल, ललितपुर नेपाल ।

फोन, नं. २१–१९१